# अथ ज्ञानमाला

यो संसारविषे सबै सुजनको कल्याणका खातिर,
शिक्षा अर्जुनलाइ बक्सनुभयो पौंचेर योगेश्वर ।
शिक्षा सोहि पढी पवित्र मनले गोविन्द सम्झीकन,
संसारी जन तर्दछन् सहजमा यस्मा लगाई मन ॥

पूर्वकालमा श्रीकृष्णद्वैपायन व्यासका पुत्र परमहंस श्री शुकदेवजी डुल्दै राजाकहाँ पाल्नुभयो । त्यस बेला राजा परीक्षित् सिंहासनमा बसेर राज्य-सम्बन्धी छलफल गरिरहेका थिए, त्यसै बेला श्रीशुकदेवजी पाल्नुभएको देखेर तत्काल सिंहासनबाट ओर्ली आवाहानपूर्वक गुरुदेवजीका चरणकमलमा न्यूरेर दण्डवत् प्रणाम गरी, सामुन्ने उभिएर विनयपूर्वक दुवै हात जोरेर उत्तम सिंहासनमा बसालेर पाउ धोई चरणोदक पान गरी, महलमा पनि छर्कन लगाई विधिपूर्वक गुरुदेवजीको षोडशोपचारले पूजा गरी, अनेक थरीका पक्वान्न नैवेद्यहरू भोजन गराई, विनम्र भावले बिन्ती गरे- हे दयालो, महर्षे ! हजुरको कृपाले मैले सम्पूर्ण वेद-पुराण र शास्त्रादि सुनेर भित्रको अन्धकार धपाइसकेको छु,तसर्थ मेरो मनमा अपार आनन्द प्राप्त भइरहेको छ । अब अहिले हजुरको दर्शन पाएको हुनाले मनमा उठेको एउटा सन्देह मेटाउन चाहन्छु। हे कृपानाथ! यस संसारमा जाती र नजाती दुइ थरिका कर्म छन् । ती दुइ कर्मको भेद मेरो मनमा छर्लङ्ग हुने गरी सुनाउने कृपा गर्नुहवस्- जसमा मेरो मनमा उठेको सन्देह निवारण होओस् । राजा परीक्षित्को यस्ता वचन सुनेर श्रीशुकदेवजी मनमनै प्रसन्न भएर आज्ञा गर्न लाग्नुभयो- हे परीक्षित् ! तिमीले यो जुन प्रश्न गर्‍यौ यो अत्यन्त उत्तम प्रश्न हो। यसले संसारी मोहजालमा अल्झेका प्राणीहरूको धेरै उपकार हुनेछ ।

एक दिन तिम्रा पितामह धनञ्जयको मनमा पनि यही शंका भएर श्रीकृष्णसित प्रश्न गर्दा उहाँले जुन उत्तर दिनुभयो, सोही ज्ञान म तिमीलाई सुनाउन तयार छु, तिमी केवल ध्यान दिएर सुन ।

हे राजन् ! कुनै दिन प्रातःकालमा श्रीकृष्ण भगवान् अर्जुनलाई भेट्न उनको घर जानुभयो । उहाँ सेवकहरूद्वारा 'अर्जुन उठेका छैनन्, सुतिरहेकै छन्' यस्तो समाचार पाई श्रीकृष्ण मनमनै छक्क पर्नुभयो, त्यसै बेला सपनामा अर्जुनले श्री कृष्णको दर्शन पाए। अर्जुनको निद्रा भंग गयो । सेवकहरू आएर घरमा स्वयं श्रीकृष्ण पाल्नुभएको छ भन्ने सूचना दिनासाथ अर्जुन हड़बड़ गर्दै बाहिर निस्की, त्यहाँ श्रीकृष्णलाई देखेर तत्काल चरण-कमलमा दण्डवत् गरी प्रार्थना गर्न लागे- हे गोविन्द ! हे प्रभो ! आज मेरो ठूलो अपराध हुन गयो । हजुर यो कसूर क्षमा गरिबक्सियोस् । तिनको यस्तो विनय-पूर्वकको कुरा सुनेर श्रीकृष्ण आज्ञा गर्नहुन्छ-हे विजय ! तिमी निकै बुद्धिमान् छौ र ज्ञानी पनि छौ । अत: तिमीले मलाई निद्रामा देख्दा निकै आश्चर्य लाग्यो! तर यति अबेर पनि तिमी सपना देख्ने गरी निदाएका छौ भन्ने सुनेर मलाई साह्रै दुःख लाग्यो । हेर , यो मनुष्य चोला धेरै कष्टले पाइन्छ । यस्तो अमूल्य चोला पाएर यति अबेरसम्म सुतिरहनु तिमी जस्ता बुद्धिमान्को योग्य कदापि होइन ।

आफ्ना परम हितैषी श्रीकृष्णका त्यस्ता वचन सुनेर अर्जुन हात जोरी बिन्ती गर्न लागे- हे दामोदर ! हे दयासागर! यो मेरो ठूलो अपराध हुन गयो। मलाई बालक र अज्ञानी जानी मबाट भएका सबै अपराध क्षमा गरिदिनोस्। अब ममाथि कृपा गरी आज्ञा हवस् -कुन कुन अहित गर्ने कर्म त्याग्नु आवश्यक छ । तिनको यस्ता नम्र वचन सुनेर श्रीकृष्ण मुसु-मुसु हाँस्तै आज्ञा गर्नुहुन्छ- हे सखे ! हे अर्जुन ! म जो शिक्षा भन्न जाँदै छु, त्यो वेद-शास्त्रमा पनि प्रकट छैन । फेरि जुन शिक्षा देवताहरूले पनि पाएका छैनन्, त्यो शिक्षा म तिमीलाई सुनाउन गइरहेको छु । तिमी केवल ध्यान दिएर सुन ।

शिक्षा (१)- हे अर्जुन ! सूर्योदयको अवसरमा जान्ने बुझ्ने व्यक्तिले सुतिरहनु उचित हुन्न किनकि अन्दाजी एक प्रहर रात्रि छँदै देवताहरूको आवागमन आरम्भ हुन्छ, यसै कारण, केही रात्रि बाँकी छँदै उठेर ईश्वरको ध्यान, भजनमा आनन्द मनाइरहनुपर्छ । अनि अरुणोदय भएपछि नित्य-कर्म समाप्त गरेर स्नान गरी श्रीसूर्यलाई उर्घ्य दिनू । पितृलाई तर्पण दिनू । किनकि यसरी अर्घ्य दिनाले पितृ तृप्त हुन्छन् अनि आशीर्वाद दिन्छन् । अनि त्यो व्यक्ति यस लोकमा र परलोकमा समेत सुख भोग्न पाउँदछ ।

गूढार्थ- मनुष्यका देहको ताप चीसो नहुँदै सूर्योदयभन्दा केही अगाडिको चीसो समाप्त भएको, तर नतातेको बिहानको स्वच्छ वायुको सेवन र मधुरो सूर्य-किरणको सेवनले देहलाई अनेक प्रकारका लाभ दिन्छ ॥

शिक्षा (२)- हे अर्जुन ! आफ्नू नित्य सुत्ने पलंगमा आफ्नी विवाहिता पत्नी बाहेक अरूसँग नसुत्नू वा अरूलाई सुत्न नदिनू । किनकि विवाहिता पत्नी आफ्नू आधा अंग कहिन्छे । अरू कोही आफ्नू बिछौनामा सुत्यो भने, त्यो त्यसका पाप पुण्यको भागी हुन्छ । यस्तो श्रीकृष्णको वचन सुनेर विजयले बिन्ती गरे- हे दया-सागर, हे करुणानिधान ! घरमा

आएको पाहुनाले बिछौना नलिई आयो भने, त्यसलाई के गर्ने? अनि श्रीकृष्ण अज्ञा गर्नुहुन्छ - हे विजय ! कुनै अवसरमा पाहुना बिछौना नलिई आए भने, आफ्नू बिछौनामाथि उसले लगाएको लुगा बिछाएर सुत्न दिए कुनै दोष लाग्दैन ।।

गूढार्थ- कसैको पनि गुप्त वा प्रत्यक्ष रोगका कीटाणु बिछौनामा सर्ने सम्भावना भएको हुनाले कुनै पनि बाहिरिया व्यक्तिलाई आफ्नू बिछौनामा नसुताउनू उत्तम मानिन्छ ।।

शिक्षा (३)- हे विजय ! विधवा नारीले पकाएको वस्तु खाए पाप लाग्दछ । किनकि पति मरेपछि नारीको आधा अंग मरे समान हुन्छ । त्यसै कारणले उसले पकाएको वस्तु खानु हुँदैन ।।

गूढार्थ- उमेरमै विधवा हुने पापी स्त्रीहरूको हातको अन्न खानु आफू पनि पापी बन्नु जस्तै हो, त्यसैले सकेसम्म नखानू।।

शिक्षा (४)- हे विजय ! साँझमा घर आँगन बढार्नु हुँदैन, बढारे दरिद्र हुइन्छ किनकि साँझमा लक्ष्मी आउँछिन् त्यस बेला घर आँगन बढारिरहेको देखे कहिल्यै नआउने गरी श्राप दिंदै फर्केर जान्छिन् फेरि आउन्नन् ।।

गूढार्थ- दिनभरि कमाएको कमाइ घरमा थन्क्याउने अवसर सायंकाल हो । त्यति बेला घर आँगन बढार्दा दिउँसो यता-उता

छरिएका कामका वस्तु पनि नदेखेर बाहिर फालिने सम्भव छ ॥

शिक्षा (५)- कुनै व्यक्तिले एकादशी वा कुनै व्रत गरेको दिन स्त्रीसित सम्भोग गऱ्यो भने व्रत निष्फल हुन्छ । त्यस्तो सुनेपछि विजयले सोधे- हे कृष्ण ! व्रतको दिन यदि ऋतुस्नान गरेको दिन पर्न गयो भने के गर्ने ? सम्भोग गरे व्रत-भंग हुने भयो, नगरे पातकी भइने भयो । विजयको यस्तो बिन्ती सुनी श्रीकृष्ण भन्नुहुन्छ- हे सखे ! यस्तो अवस्था पर्न गए आधारात बितेपछि मात्र समागम गर्नू । किनकि आधारात-पछिको समय अर्को दिनमा सामेल छ ॥

गूढार्थ- सम्भोगको अन्त्यमा प्यास भोक लाग्नु स्वाभाविकै हो । त्यसैले आधारातको बाद भनेको हो ॥

शिक्षा (६)- हे विजय ! आज रातमा बालेर रहेको बत्ती भोलिपल्ट नबाल्नू ; बाल्यो भने पाप लाग्दछ । त्यही पापले उसकी स्त्री धेरै दिनसम्म बाँझी रहन्छे । यति सुनेर विजय बिन्ती गर्दछन् - हे प्रभो ! हजुरले आज्ञा भएको शिक्षा सुनेर चित्त प्रसन्न भयो । हे नाथ ! अझ अरू केही शिक्षा आज्ञा गर्नुहवस् ॥

गूढार्थ - हिजो बालेर बचेको दीयोको बत्तीलाई मुर्दा तेल वा मुर्दा बत्ती भन्छन् । त्यस्तो तेल या बत्तीको गन्धले दूषित

भएको हावामा सास फेर्नाले नारीहरू प्रायः गर्भ नअडिने खालका हुन जान्छन् ॥

शिक्षा (७)- हे विजय ! जो व्यक्ति सूर्यतिर फर्केर दतिवन कुल्ला गर्दछ, त्यसलाई महापातकीमा गनिन्छ । त्यो मरेपछि घोर नरकमा पर्दछ, किनकि अग्नि, जल र सूर्य यी तीनै देवता प्रत्यक्ष छन् : जो प्रेमपूर्वक यिनको पूजा गर्दछ, तिनलाई यज्ञ गरेको फल प्राप्त हुन्छ । यति श्रीकृष्णले भनेको सुनी अर्जुन बिन्ती गर्दछन् - हे नाथ ! ती तीन देवताको पूजा कुन विधानले गर्नुपर्दछ ? त्यो आज्ञा हवस् । यसरी विजयले बिन्ती गर्दा श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- सूर्य नारायणको निमित्त रविवारको व्रत गर्न सक्तैनन् भने त्यस दिन नून नखानू । बिहानै उठेर श्रीसूर्यलाई तामाको अर्घपात्रले अर्घ्य दिनू, अनि पूजा गर्दा बिहान स्नान गरेर आफ्ना इष्टदेवको ध्यान र स्मरण गरी घिउ सक्खर, तेल आदि सामग्रीले अग्निमा हवन गर्नू । जलदेवतालाई प्रातःकाल उठेर स्नान गरी धूप दीप नैवेद्य गर्नू। दिनहुँ यस्ता प्रकारले जो व्यक्ति अग्नि, जल र सूर्यको पूजा गर्दछ, त्यो यिनका आशीर्वादले यस लोकमा धन-धान्य र सन्तान, परलोकमा पनि वैकुण्ठधाम जानेछ ॥

गूढार्थ- सामुका सूर्यबाट अधिक प्राणवायु प्राप्त

भइरहन्छ । अतः मुखभित्र जान नागेको प्राणवायुमा थुक्दा त्यो दूषित हुँदै भित्र जान्छ र रगत-समेत बिगार्दछ । त्यो रगतको गिदीमा नजाति प्रभाव पर्दछ र बुद्धि भ्रष्ट पार्दछ, अनि बुद्धि बिग्रिए- पछि पाप गरेर बाँचेसम्म यहाँ र मरेपछि उहाँ पनि अनेक कष्ट पाउँछ । फेरि ग्रहहरूको जाती-नजाती प्रभाव दिन-दिनमा भौगोलिक परिस्थिति-अनुसार पृथ्वीका अनेक पदार्थहरूमा परिरहन्छ । रविवार सूर्यको प्रभाव नराम्रो गरी नूनमा आएर पर्ने भएको हुनाले नून विषाक्त हुन गएको रहन्छ, त्यस्तो नून प्रयोग गर्दा शरीरमा घाउ-फोडा आदि निस्कने गर्दछ । फेरि शुद्ध तामाको पात्रमा पानी राख्दा त्यस पानीमा हुने सूक्ष्म (आँखाले नदेखिने) कीटाणु मर्दछन् र पानी स्वच्छ बन्दछ । त्यस्तो पानी श्वास तान्ने नलीको अङ्ग माथिबाट धारो लगाएर सूर्यतिर फर्की धारो झारिरहँदा भर्खर उदाएका सूर्यको अमृतमय किरण स्वच्छ पानीमा अन्तरालका कीटाणु छान्दै सासद्वारा भित्र पस्छ र लाभ गर्दछ । बिहानको स्वच्छ वातावरणमा निर्मल भएर सूर्यका तेजको स्मरणपूर्वक ध्यान गर्नाले बुद्धि तिखारिन्छ । अग्निलाई ईन्धनले पूजा गरेर जल-देवतालाई पूजा गर्दा जो शक्ति प्राप्त हुन्छ, त्यो त सबैले देखेकै छन्, जसले विधिपूर्वक गरेका छन्, तिनको धन, सन्तान, सुख

परिपूर्ण भएके छन् र परलोकमा (अर्काको देशमा) पनि वैकुण्ठ (विगता कुण्ठा यस्मिन् तत् विकुण्ठम्, विकुण्ठस्य अवरोधस्य भाव: वैकुण्ठ) अर्थात् निर्बाध गति (प्रवाह)पाइरहेके छन् ।।

शिक्षा (८)- हे विजय ! पानीमा सरासर कहिल्यै नपस्नू, जलदेवता-लाई नढोगी, शिरमा पानी नछर्किई, पानी नअचाई पानीमा पस्यो भने ठूलो पाप लाग्दछ; त्यस पापले तत्काल मर्न पनि सक्दछ, नमरे पनि बिरामी पर्छ । त्यसै कारण पानीमा पारि पर्नुपर्दा मार्जन आचमन गरेर मात्र तर्नुपर्छ ।।

गूढार्थ- कतैबाट धापिएर आएको व्यक्ति गर्मीले आत्तिएको बेला सरासर पानीमा पस्यो वा चीसो पानी शरीरमा खन्यायो भने ठूलो हानि हुन सक्छ । तसर्थ धापिएर आएका व्यक्तिले शिर ठण्डा पार्नु, अनि हात-पाउ धोएर मात्रै पानी पिउनुपर्दछ । यसरी शरीरको तापको सन्तुलन ठीक भएपछि जे गरे पनि हानि हुँदैन ।।

शिक्षा (९)- बल्दो बत्ती ननिभाउनू; निभाउनै परे पनि सासले फुकेर ननिभाउनू । बलिरहेको बत्तीमा अर्को बत्ती पनि नसल्काउनू, बाल्नैपरे तृणद्वारा बाल्नू, यो कुरा नमाने ठूलो कष्टमा परिन्छ ।।

गूढार्थ- निकै बेर बलिसकेको बत्ती निभाउँदा निस्कने

गन्धलाई मुर्दागन्ध भन्दछन् । यस्तो गन्धले डिम्बाणुमा नराम्रो प्रभाव पार्दछ वा जोरेर बाल्दा त्यसबाट मुर्दा-अमुर्दामिश्रित हानिकारक गैस निस्कन्छ र हानि गर्छ ॥

शिक्षा (१०)- हे विजय ! कुनै पनि व्रत बसेको मानिसले पलंगमा सुत्नु हुँदैन; किनकि जुन देवताको व्रत गरिन्छ, ती देवताले व्रती मनुष्यका देहमा वास गरेका हुन्छन्; यसै कारण व्रतीले सफा सुग्घर भएर बस्नुपर्दछ, खाट-पलंगमा नसुतेर भूमिमा सुत्नुपर्दछ, स्त्रीसित सँगै सुत्नु हुँदैन । एक छाक फलाहार गर्नू, सके ब्राह्मणलाई केही फल-दान दिनू । यति गर्नाले व्रत सफल हुन्छ र देवताले आशीर्वाद दिन्छन् ॥

गूढार्थ- व्रत गर्नुको अर्थ हो देह-शोधन । सके सातामा एक दिन, नसके पन्ध्र-पन्ध्र दिनमा एक दिन उपवास गर्ने वा संयमित आहार-बिहार गर्न सके निरोग रहिन्छ, त्यसै कारण व्रत बसेको दिन काम-वर्धक वस्तुको उपभोग नगर्नू, गरे त्यसको प्रभाव उल्टो हुन सक्छ ॥

शिक्षा (११)- हे विजय ! व्रत गरेको दिन आफ्नू जूठो कसैलाई पनि खान नदिनू, किनकि जूठो खाने पनि व्रतका फलको भोगी बन्दछ, अतः दोषयुक्त छ ॥

गूढार्थ- व्रत बसेको दिन पेटमा बासी वस्तु मात्रै कुहेको

स्थितिमा रहन्छ; व्रतीको सास मुखबाट हानिकारक ग्यास-सहित बाहिर निस्किरहन्छ, त्यस्ताको जूठोमा बासी मलका कीटाणु रहने हुनाले जूठो खानेलाई निकै हानि गर्दछ ॥

शिक्षा (१२)- हे विजय ! भान्सामा सबै वस्तु पाकि नसकी नखानू । अग्निलाई अलि-अलि आहुति नदिई कसैलाई आगो पनि नदिनू । थाल कचौरा पाइएन भनी पाक्य-वस्तु भूमिमा नराख्नू । यी नियम पालन नगर्ने व्यक्ति दरिद्र हुन्छ । यसै कारण, जब भान्सा तयार हुन्छ तब स्वच्छ पिह्रामा बसेर, अग्निमा पाक्य वस्तु हवन गरेर, अन्नदेवतालाई प्रणाम गरी, पाकेको सबै वस्तु अलि-अलि अग्निमा चढाएर, सारा खाना परमात्मालाई अर्पण गरी, अन्नदेवतालाई हात जोरेर, सके अतिथिलाई र गोग्रास पर सारेर अनि मात्रै आफूले भोजन गर्नू, यस पुण्यको प्रभावले अग्नि र अन्नदेवताको आशीर्वादले त्यो जन सदा सुखी रहनेछ ॥

गूढार्थ- सबै वस्तु नपाकी, नभर्सी, बर्ता तातो खाएर चीसो पानी खायो भने तुरुन्त पेटको कुनै व्यथा आरम्भ हुनेछ । बीचमै कसैलाई आगो दिंदा ताप बिग्रिएर खाना कचपचिन्छ । सबै वस्तुबाट अलि-अलि आगोमा हालेर जाँचे पाके-नपाकेको जानिन्छ । खाना पर नसारे आशावादी निराश

हुन्छन् । अपवित्र हात-पाउ र लुगाले खाए रोगका कीटाणु खानामा सर्दछन् ॥

शिक्षा (१३)- हे विजय ! जो व्यक्ति तामाको भाँडोलाई अरू भाँडाको जूठो मस्कोले माझ्ला वा दिसा जाने पात्र बनाउला, त्यो व्यक्ति अवश्य नरकमा पर्नेछ । किनकि सबै धातुहरूमा तामा पवित्र कहिन्छ, तामाको लोहोटामा पानी भरेर स्नान गऱ्यो भने गंगा-स्नान गरेजस्तै फल पाइनेछ । तामाको अर्घौतामा तिल, जल, अन्न, फूल भरेर सूर्यलाई अर्घ्य, पितृहरूलाई तर्पण दिए ठूलो पुण्य हुन्छ ॥

गूढार्थ- तामाको पात्रमा दूध तताएर पियो वा पायस पकाएर खायो भने कुष्ठरोग हुन्छ । जस्तै गंगाजल कीटाणु-रहित छ, त्यस्तै तामाको पात्रमा हालेको जल पनि कीटाणुसहित हुन्छ । अर्घ्य दिने र तर्पण गर्ने जल निर्मल बन्दछ । यो रसेन्द्रसारको कथन हो ॥

शिक्षा (१४)- हे विजय ! जसले ब्राह्मणी वा अर्काकी स्त्रीसित जानी जानी भोग गऱ्यो र त्यसबाट छोरो पनि जन्मियो भने, त्यस पापी व्यक्तिका पितृहरू जुन आफ्ना उत्तम कर्मले स्वर्गमा बसेका भए पनि नर्कमा पर्ने हुन्छन् । पितृका लागि गरिने व्रत श्रद्धादिबाट सदा विमुख हुन्छन्, यो ठूलो पाप हो ॥

गूढार्थ- पितृका ताँती भलिभाँतिसँग जीवित पुत्र-पौत्रादिका सुकर्म वा दुष्कर्मका भागी रहन्छन्, त्यसकारण, तिनका दुष्कर्मले नरकमा खँदारिन्छन् ॥

शिक्षा (१५)- हे विजय ! स्त्रीसित भोग गरेपछि स्नान नगरी, पवित्र नभई कुनै पनि काम नगर्नू, गऱ्यो भने त्यो अवश्य नरकमा पर्दछ । त्यस्ताले पृथ्वीमा टेकेको एकेक पाइला पितृका टाउकामा टेकेजस्तै हुन्छ ॥

गूढार्थ- संभोग गर्दा हातमा शरीरमा लतपत फोहोर दलिएका हुन्छन् । त्यस्ताले अरू काम गर्दा त्यो जहरिइसकेको चीजले अरू चीजलाई पनि दूषित पार्छ, त्यसकारण नन्वाही कुनै काम गर्नु अकर्तव्य हो ॥

शिक्षा (१६)- हे विजय ! औंसीको दिन कुनै पनि वृक्षका हाँगा पात नभाँच्नू वा नटिप्नू । भाँचे- टिपे ब्रह्महत्या लाग्दछ। त्यस दिन दतिउन पनि नलाउनू ॥

गूढार्थ-औंसीका दिन सूर्यके राशिमा चन्द्रमा रहन्छन् । त्यस दिन चन्द्रमाको एक कला पनि प्रकट रहन्न, अतः चन्द्रमाद्वारा प्राप्त हुने अमृतपानबाट मुक्त वनस्पति नष्ट पार्नु ठूलो पाप हो ॥

शिक्षा (१७)-हे विजय ! कुनै परदेशी वा अतिथि आएर केही मागे भने आफ्नू श्रद्धा-अनुसार जे सकेको दिनू । रित्तो

नफर्काउनू, फर्काउनु ठूलो पुण्य हो ।।

गूढार्थ- अन्तरालमा विद्यमान सर्वव्यापी बिजुलीमा आकर्षण र विकर्षण दुवै शक्ति हुन्छ । जुन शक्तिलाई योग गर्न जान्नेहरू इच्छित काममा लाउन सक्छन् । त्यसैले, कसैको अन्तरात्माले कसैलाई लक्ष्य गरेर सरापेको वा आशीर्वाद दिएको यसै शक्ति-द्वारा उसै व्यक्तिलाई लाग्छ, तसर्थ निराशीले सरापेको पनि लाग्न सक्छ ।।

शिक्षा (१८)- हे विजय ! जो मनुष्य आफ्ना घरमा भाँचिएका खाट; बिग्रिएका मेच; कुच्चिएका, टुटे-फुटेका भाँडा राख्ने गर्दछ, त्यो सधैं दरिद्र रहन्छ ।।

गूढार्थ- संकुचित विचारको व्यक्तिले कुनै विकसित काम गर्न सक्तैन, त्यसैले त्यस्ताको कसैले विश्वास गर्दैनन् ।

शिक्षा (१९)- हे विजय ! जो मानिस नारायणको नाम लिंदै खाने-पिउने र हिंड्दा-बस्ता, सुत्ता जे काम गर्दा पनि ईश्वरको नाम लिंदै रहन्छ; त्यो ठूलो पुण्यात्मा कहिन्छ । त्यसले दुवै लोकमा ठूलो सुख पाउँछ र बडो पुण्यात्मा हुन्छ । फेरि जो व्यक्ति हिंड्दा-डुल्दा बाटो-घाटोमा जे मन लाग्यो त्यही खाँदै हिड्छ, मनपरि बोल्दछ, ईश्वरको नाम लिंदैन भने त्यस पापले त्यो विपत्तिको बन्धनबाट कहिल्यै मुक्त हुँदैन ।।

अपराध भयो भने पनि रिस नगर्नू, शीलवती स्त्रीले पनि आफ्नू पतिलाई ईश्वर समान ठानेर दिन-रात उसको सेवामा मन-वचन-कर्मले रत रहनुपर्दछ र पतिव्रता धर्म पालन गर्नुपर्दछ । पति जस्तै कठोर हृदयको भए पनि पतिलाई ईश्वर समान सम्झी पतिको आज्ञा ननाघ्नू । सुख-दुःख जस्तो आइपर्दछ, त्यस अवस्थामा पनि आफ्ना पतिलाई प्रसन्न गराउन आफ्नू घरमा भएको गरगहना वस्त्रले श्रृंगार गरी पतिको मन प्रसन्न पारिराख्नू, जसमा पतिको मन अरू नारीतिर जान नपाओस् । यस्ता प्रकारले आफ्ना पति-पत्नीमा जो सत् व्यवहार गरी प्रीतिपूर्वक रहन्छ, त्यसलाई यस लोकमा सुख-भोग र परलोकमा पनि वैकुण्ठ धाम प्राप्त हुन्छ ।।

गूढार्थ- स्त्री-पुरुषमा गाढा प्रेम, निश्छल विश्वास भए मात्र उत्तम सन्तान उत्पन्न हुन्छन् र यस लोकमा र परलोकमा पनि सुख पाइन्छ ।।

शिक्षा (२३)- हे विजय ! दियो वा सूर्यको ज्योतिले ढाकेको छाया शरीरमा पऱ्यो भने दोष हुन्छ ।।

गूढार्थ- खाटमाथि तातो ज्योति पर्दा वा प्रकाश पर्दा खाटका कीटाणु तलतिर जान्छन् र शरीरमा खसेर हानि पुऱ्याउँछन् ।।

शिक्षा (२४)- हे विजय ! जो मनुष्य मूढताले वा केही

क्रोधले गर्दा कसैलाई मार्न खोज्दछ भने त्यो सदा कुम्भीपाक नरकमा पर्दछ ॥

गूढार्थ- विना कामको उरूलाई मार्नाले वा मार्ने उद्योग गर्नाले तुलबुलिएर हत्यारा स्वयं दुःख पाउँछ ॥

शिक्षा (२५)- हे विजय ! सुखा रोटीमा चिल्लो नघसी खानाले पाप लाग्दछ । किनकि जहाँ चिल्लो नभएको अन्नको सामान छ त्यहाँ प्रेतले विघ्न पार्दछ र त्यहाँ सधैं दरिद्रताले वास गर्दछ । त्यसै कारण, आफ्नू शक्ति-अनुसार खाने वस्तुमा घिउ तेलको प्रयोग गर्नुपर्दछ । घिउको सुगन्धले प्रेत-बाधा लाग्दैन ॥

गूढार्थ- रोटीमा घिउ भएन भने शक्ति-तत्त्व पूर्ण हुँदैन । त्यस्तो अपूर्ण खाना खानाले व्यक्ति दुर्बल भई कुनै पनि श्रम गर्न नसक्ने निर्धो र दरिद्र हुन्छ । तत्त्वहीन खाना भनेको प्रेत-बाधा परेको मान्नू ।

शिक्षा (२६)- हे विजय ! दीयो बालेर त्यसैमा कुनै वस्तु पकाउने वा तताउने काम नगर्नू । त्यसो गर्नाले पाप लाग्दछ ॥

गूढार्थ- बत्तीको आगो मुर्दाको आगो समान कहिन्छ, त्यसको दुर्गन्धले अनेक थरीका व्याधि उत्पन्न गर्दछ ॥

शिक्षा (२७)- हे विजय ! बिहान र बेलुकाको समयमा

घरको सँघारमा नबस्नू । बस्नाले ऋण बढ्दछ र पुण्य घट्दै जान्छ ॥

गूढार्थ- बिहान बेलुका घरमा हड़बड़ गर्दै हिंड्ने व्यक्तिलाई कतै चोट लाग्यो भने ऋण काढेर पनि औषधि गर्नैपर्दछ ॥

शिक्षा (२८)- हे विजय ! जो व्यक्ति बगैंचा, तलाउ, नदीको किनारमा मल-मूत्र त्याग गर्दछ, त्यो अवश्य नरक पर्दछ ॥

गूढार्थ- दूषित जलमा स्नान गर्नेले, वा त्यस्तो दूषित जल पिउनाले वा साग-पात खानाले अनेक कष्ट पाइन्छ, कष्ट नै पापको मूल हो ॥

शिक्षा (२९)- हे अर्जुन ! बिहान कसिङ्गर बढारी ढोकाको कुनामा नफ्याक्नू, अनि नबढारी लिपपोत पनि नगर्नू । त्यसरी फ्याँक्यो वा लिपपोत गर्‍यो भने त्यसको संपत्ति लक्ष्मीको श्रापले थोरै दिनमै धननाश भएर जान्छ ॥

गूढार्थ - घुरानमै लिपपोत गर्दा वा बढारी घुरान ढोकाको कुनामा थुपार्दा त्यसबाट आएको गन्धले स्वास्थ्य बिग्रन्छ र ओखती गर्दागर्दै रोगीका घरबाट लक्ष्मी निस्किरहन्छिन् ॥

शिक्षा (३०)- हे विजय ! जो व्यक्ति एकादशीका दिन अन्न खान्छ, व्रत बस्तैन भने त्यसको जीवन पशु-समान हुन्छ ।

अन्त्यमा पंच-पातकी भई नर्कमा जानुपर्दछ । यसै कारण, सबै मानिसले एकादशीको दिन व्रत बस्नुपर्दछ । अनि परमेश्वरको ध्यान गरी रात्रिमा जाग्राम बस्नू, त्यसले सम्पूर्ण पापको नाश हुन्छ, त्यसका पितृहरू स्वर्ग जान्छन् । यति सुनेर विजय बिन्ती गर्दछन्– हे नाथ ! कदाचित् बिर्सिएर एकादशींका दिन अन्न खाइयो भने, त्यसको पाप कसरी काटिन्छ? अनि श्रीकृष्ण भन्नुहुन्छ – हे विजय ! एकादशीका दिन बिर्सेर अन्न खाइयो भने त्यसको भोलिपल्ट एकादशी मानेर व्रत बस्नुपर्दछ । यदि खाँदाखाँदै थाहा पाइयो भने मुखको गाँस थुकेर खान छाडिदिनू र त्यसै दिन व्रत गर्‍यो भने पनि त्यसले पूर्ण फल प्राप्त गर्दछ । यदि एकादशीको व्रत निर्जल अर्थात् पानी पनि नपिई गर्न सकेन भने गाईको दूध-बाहेक अरू केही नखाए, त्यस व्रतले यज्ञकै समान उत्तम फल दिन्छ । एकादशीका दिन अन्न खाए कीरा खाएझैं हुन्छ, अर्थात् जति अन्नका दाना छन्, त्यति हत्या लाग्दछ । एकादशीमा सबै पाप अन्नमा गएर बसेको हुन्छ । त्यसै कारण, अरू व्रत बस्न नसके पनि एकादशीको व्रत अवश्य गर्नू भनी वासुदेवले आज्ञा भएको सुनी अर्जुन मनमनै डराई चिन्तामा परे । त्यो देखेर अन्यन्त दयालु मनले सखाको कष्ट निवारण गर्नका लागि श्रीकृष्णले

आज्ञा गर्नुभयो- हे अर्जुन! तिम्रो भक्ति-प्रेम देखेर मैले यो अत्यन्त गुप्त कुरा तिमीलाई सुनाएँ । यो मैले भनेको कुरामा चित्त दिई मैले भने- अनुसार काम गर्‍यौ भने तिम्रो सबै तरहले कल्याण हुनेछ । यस्तो वचन सुनेर अर्जुनले श्रीकृष्णका चरणारविन्दमा शिर राखी हात जोरेर अत्यन्त प्रसन्न भई बिन्ती गर्दा भए – हे राधापति ! हजुरले संसाररूपी सागर तर्ने डुँगा जस्तो भएको यो शिक्षा आफ्ना मुखारविन्दबाट आज्ञा भयो, हे नाथ ! त्यसको महिमा यस्तो छ भन्ने वर्णन गर्न शेष र सरस्वतीले पनि सक्तैनन् भने मेरो के सामर्थ्य छ । यसको हजुरबाट परीक्षा गरी मलाई उचित शिक्षा दिनु योग्य छ । यो कुरा हजुरलाई उचित लाग्दछ भने हजुरबाट आज्ञा भएको धर्मको धारा समान शिक्षा सुन्नाले म कहिल्यै अघाउन्नँ, अरू पनि शिक्षा दिनुहोस् । यति अर्जुनको बिन्ती सुनी श्रीकृष्णले उनलाई धर्मको अनेक शिक्षा दिनुभयो ॥

गूढार्थ – प्राणीको शरीरका श्वेताणुको उत्पत्तिको गति रोकिएपछि रक्ताणुको अति छिटो वृद्धि हुन्छ, जति छिटो वृद्धि हुन्छ त्यति नै छिटो शरीर घुनाउन थाल्दछ । त्यसै कारण, पन्ध्र-पन्ध्र दिनको एकादशीको व्रतमा निराहार व्रत बसेर रक्ताणुको वृद्धि रोकेर शरीर शुद्ध पार्नुपर्दछ । यसरी बराबर शरीर

शुद्ध पारिरहेन भने देह छिटै घुनाएर नाशिन्छ । यसैलाई भन्दछन् पंचमहापातक । शरीरमा घुन लाग्ने सबै कारणको निवारण गर्न सके दीर्घायु हुनमा कुनै रोक छैन ॥

शिक्षा (३१)- हे विजय ! जो व्यक्ति रजोवती नारीसित सम्भोग गर्दछ, त्यस पापले गर्दा यस लोकमा रोगग्रस्त भएर मरेपछि पनि त्यसले हजारौं वर्ष नरकमा बस्नुपर्दछ । किनकि रजस्वला स्त्री पहिलो दिन ब्रह्मघातिनी, दोस्रो दिन चाण्डाल्नी र तेस्रो दिन धोबिनी समान हुन्छे । सोही कारणले तीन दिनसम्म उसलाई स्पर्श गर्नु पनि ठूलो पाप हो ॥

गूढार्थ- प्रत्येक महीनामा हुने नारीको ऋतुस्राव विषयुक्त हुन्छ, त्यस समयको समागमको, त्यो दूषित प्रभावले पतिको रक्त दूषित पारिदिन्छ । अनि केही समयपछि त्यो पतित पतिको अंग सुनिएर कुही गली विभिन्न रोग लागी गिर्न थाल्दछन् । यो नसर्ने कुष्ठ रोग नै हो भने पनि हुन्छ ॥

शिक्षा (३२)- हे विजय ! जुन व्यक्ति रजस्वला स्त्रीले छोएको खान्छ र छातछुत बार्दैन भने त्यस पापले गर्दा अघि गरेका सबै पुण्यकार्यका सुफल नष्ट भएर जान्छन्, अनि जसले ऋतुस्नान गरेको दिन अर्थात् रजोवती भएको चौथो राति आफ्नी पत्नीसित समागम गर्दैन भने त्यसलाई प्रत्येक

पटक एक मानिस मारेको पाप लाग्दछ । श्रीकृष्णको यस्तो उपदेश सुनेर पार्थ फेरि बिन्ती गर्दछन् - हे भगवन्, रजस्वला भएकी नारीको पुरुष यदि कतै परदेश गएको भए, त्यो पाप कसरी निवारण हुनेछ ? पार्थले यसरी बिन्ती गरेको सुनी श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- हे धनंजय ! यदि रजस्वला भएकी नारीको आफ्नू पति घरमा छैन भने चौथो दिन स्नान गरिसकेपछि श्रीसूर्यतिर फर्केर सूर्यनारायणको दर्शन गरी, आफ्नू पतिको अनुहार मनले सम्झना गरिदिए, त्यस ऋतुस्नाता नारीको लाग्ने त्यस पापबाट मुक्त हुन्छ ॥

गूढार्थ- रजोवतीले छोएको विषाक्त भोजनले रगत दूषित भएर दुर्बल सन्तान उत्पन्न हुन्छन् । अघि-अघि यही भारतवर्षमा अनेक स्वतन्त्र राजाहरू आफ्नू जोशिलो वेग फाल्न व्यर्थ युद्ध गरिहरन्थे र अनेक मानिस मारिइँदा पुरुषको संख्या घट्ने र विधवाको संख्या बढेर सन्तानको अभाव पर्दथ्यो । त्यसैले उचित समयमा गर्भाधान नगेरर स्त्री बाँझी राख्नु ठुलो पाप मानिन्थ्यो ॥

शिक्षा (३३)- हे विजय ! जो व्यक्तिलाई जुन वस्तु पेटभरि खाने इच्छा लाग्छ, तर त्यो वस्तु नखाई वा सावगासले नपुगेर, शरीरलाई कष्ट दियो भने ठूलो दोष लाग्दछ । सोही

कारणले त्यो यसै जन्ममा सधैं दुःखी, निराश रहनेछ । फेरि मरेपछि पनि आफ्नू तृष्णा भएको वस्तु खान नपाएको हुनाले जीवात्मा त्यसैमा लोभिइरहन्छ र कष्ट भोग्नुपर्दछ । श्रीकृष्णले यस्तो आज्ञा भएको सुनी, विजय बिन्ती गर्दछन्- हे प्रभो ! जुन दरिद्र मानिसले आफ्नू मनले भनेजस्तो वस्तु खान सक्तैन, त्यसले आफ्नू मन कसरी प्रसन्न पार्ने ? विजयले यस्तो बिन्ती गरेको सुनी भगवान् आज्ञा गर्नुहुन्छ- हे किरीटि ! दरिद्रीलाई यदि आफूले भनेजस्तो वस्तु खान पुग्दैन भने पनि रविवारको दिन र आफ्नू जन्म-नक्षत्रको दिन, तथा औंसीको दिन आफूलाई तृष्णा लागेको वस्तु पेटभरि भोजन गरी आफ्नू जीवात्मालाई सन्तुष्ट पार्नू त मनोकामना पूर्ण हुनेछ । श्रीकृष्णको यस्तो आज्ञा सुनेर विजयले भने- हे भगवन् ! यदि दरिद्रले इच्छा गरेको वस्तु खान सकेन भने, त्यो पाप कसरी मेटाउने ? अनि श्रीकृष्ण भन्नुहुन्छ- हे विजय ! यदि सावगासले भ्याउन्न भने जन्मदिन वा औंसीमा त्यो वस्तु खाए पनि दोष मेटिन्छ, भगवान्‌ले उसको इच्छा पूर्ण गरिदिनुहुन्छ ॥

गूढार्थ- समाजमा प्रतिष्ठित मानी पवित्र बन्न खाउँ-खाउँ लाग्दा पनि नखाएर माछा-मासु छोड्नेले मर्ने साल त्यो खाएको र त्यसैको नाउँ जपेको कति देखिएको छ । यसले सिद्ध हुन्छ

कि खान मन लागेको वस्तु खानैपर्दो रहेछ ।।

शिक्षा (३४) – हे विजय ! कसैले केही भाकल (कबुल) गरेको कुरा पूरा गर्दैन वा कसैलाई केही दिन्छु भनेर विफल गर्दछ भने त्यसलाई ठूलो पाप लाग्दछ । त्यसले त्यो भाकल अरू-अरू जन्ममा पनि कुनै न कुनै रीतले पूरा गर्नैपर्दछ । त्यसै कारण, त्यस्ता कुरा थाती राख्ने वा त्यस्तो अनावश्यक काम कदापि नगर्नू ।।

गूढार्थ- चोरिएका मालको खोजी हुँदा चोरको रगत खराब भएर अनुहारको आकार बदलिए-जस्तै, आफूले प्रतिज्ञा गरेको कार्य पूरा गरेन भने चित्तमा एक प्रकारको खिन्नता रहिरहन्छ, त्यसैले रोगसम्म लाग्न सक्छ, यही नै पापको फल हो ।।

शिक्षा (३५)- हे विजय, जो मानिस केटासित केही धन लिएर छोरीको बिहे गरिदिन्छ, त्यो व्यक्ति सधैं दरिद्र रहन्छ र त्यस्ताले दिएको श्राद्ध तर्पण पनि पितृदेवले पाउँदैनन् । त्यस व्यक्तिले नर्कको भोग गर्नैपर्दछ ।।

गूढार्थ- बेचेको वस्तुमा आफ्नू अधिकार रहन्न । अनि अधिकार नभएको चीज दान गरेमा केही फल पाइन्न, आफ्नू सन्तान बेचेर खानु दुष्कर्म हो र धिक्कार हो ।।

शिक्षा (३६)- हे विजय ! कसैले पनि कसैसँग केही वस्तु सकेसम्म नमाग्नू, ईश्वरले जे जति दिएको छ, त्यसैमा सन्तोष मान्नु उचित छ ॥

गूढार्थ- सन्तोष नै ठूलो आनन्द हो र आनन्द नै ठूलो पुण्यको फल हो ॥

शिक्षा (३७)- हे विजय ! कसैले आफ्ना आवश्यक वस्तु माग्यो भने तथा त्यो वस्तु आफूले दिन हुने वा दिन सकिने भए त्यो वस्तु दिंदा अवश्य यज्ञ गरेको फल प्राप्त हुन्छ । किनकि प्राणीको उत्तम प्रसन्नता नै परमात्माको प्रसन्नता हो ॥

गूढार्थ- कसैले कसैको वास्तविक आवश्यकता पूरा गरिदिंदा मन अति प्रसन्न हुन्छ । प्रसन्नता नै पुण्यको फल हो ॥

शिक्षा (३८)- हे विजय ! कोही मानिस आफ्नू कार्यसिद्धिका लागि खाटमा अथवा मेचमा बसेर जगदीश्वरको ध्यान-पूजा गर्दछ भने, त्यो सारा काम निष्फल हुन्छ । किनकि कुनै पनि कामनाले भगवान्को ध्यान पूजा गर्दा पवित्र स्थानमा ऊनी वस्त्र वा मृगचर्ममा वा कुशासनमा पत्नीसहित भएर पूर्व वा उत्तर मुख गरेर बसी जगदीश्वरको ध्यान-पूजा गरे, पूजामा मन लगाए मात्र त्यो फलदायक हुन्छ ॥

गूढार्थ- नियमपूर्वक, श्रद्धाभक्तिसाथ गरेको पूजा-पाठ नै पुण्यदायी हुन्छ ॥

शिक्षा (३९)- हे विजय ! जो व्यक्ति गंगाजी वा कुनै तीर्थ, देवालयमा वा अन्तै कहीं जाँदा परस्त्रीतिर पापी नयनले हेर्छ भने, त्यस व्यक्तिको पाप कहिल्यै छुट्न सक्तैन । मरेपछि पनि यमदूतहरूले त्यस पापीलाई नरकमा हालेर रातो पारेको फलामको झीरले बारम्बार रोपिरहन्छन् र अनेक थरिका यातना दिइरहन्छन् । श्रीकृष्णले यस्तो भनेको सुनी-अर्जुनले भगवान्को अनेक स्तुति गरी फेरि बिन्ती गरे - हे यदुपति ! अरू पनि मलाई धर्म-शिक्षा सुन्नको इच्छा छ । किनकि अज्ञानमयी अन्धकारले मेरो चित्त ढाकेको छ, त्यसलाई हजुरको शिक्षारूपी बत्तीले प्रकाश पारिदिन्छ ॥

गूढार्थ- सबै ध्यान परस्त्रीको ढिस्के नितम्ब वा पर-पुरुषको शरीर-सौष्ठवतिर लम्कियो भने विपत्ति आउन विलम्ब हुँदैन ॥

शिक्षा (४०)- हे विजय ! गंगा-स्नान वा देव-दर्शन गर्न जाँदा जो जुत्ता लगाएर जान्छन् तिनको ध्यान जुत्तामै रहन्छ, त्यस्तालाई स्नान र दर्शनको फल प्राप्त हुँदैन ॥

गूढार्थ- खाली पयर जाँदा लक्ष्यस्थानप्रति जो श्रद्धा-

भक्ति रहन्छ, त्यो श्रद्धा-भक्ति जुत्ता लाएर जाँदा रहन्न ॥

शिक्षा (४१)- हे विजय ! जो मानिस चार जना बसेको स्थानमा बसी खाने वस्तु मगाई, अरू कसैलाई पनि नदिई सबैका सामुन्ने आफू एक्लै खान्छ भने त्यस्ता मानिसलाई महापाप लाग्दछ, त्यस पापले कहिल्यै मुक्ति हुँदैन ॥

गूढार्थ- अरूहरूलाई देखाई देखाई आफूले मात्र खाँदा चोखे लाग्यो भने अवश्यै रोगाइन्छ, जो पापको फल हो ॥

शिक्षा (४२)- हे विजय ! जो व्यक्ति रविवार, एकादशी र औंसीमा व्रत बसेर पनि, खिचडी जाउलो खान्छन्, त्यस्ताका सन्तान प्रायः हुँदैनन् र भए पनि बुद्धि बिग्रिएका हुनेछन् ॥

गूढार्थ- ती ती दिनमा वा तिथिमा आइतवार, नूनमा एकादशीमा-चामलमा, औंसीमा तर्कारीहरूमा क्रमशः विषाक्तता, कीटाणुता, अवगुणताले असर पार्ने हुनाले ती वस्तुले शुक्राणुमा वा डिम्भाणुमा बिगार पैदा गर्दछन् ॥

शिक्षा (४३)- हे विजय ! द्वादशीको दिन पुराण भन्ने वा सुन्ने दुवैलाई दोष लाग्दछ; किनकि त्यस दिन दिनभरि नै वेदव्यासजी एकाग्र भई परमेश्वरको ध्यानमा लागेका रहन्छन्। त्यस वेला कसैले पुराण भन्न थाले भने व्यासजीको चित्त पुराण-भन्ने सुन्नेतिर दगुर्दछ । यही कारणले द्वादशीमा पुराण

भन्नु सुन्नु दुवैका लागि दोष छ ।।

गूढार्थ- चिरंजीवी व्यासजीमा सबैतिर देख्ने र सुन्ने शक्ति छ । त्यो शक्ति उहाँ अरूलाई दिन र फेरि फिर्ता लिन पनि सक्नुहुन्थ्यो । महाभारतरको युद्धमा संजयलाई दिव्य-दृष्टि दिनुभएको थियो । द्वादशी तिथि उहाँको विशेष चिन्तन गर्ने दिन र फेरि प्रिय शिष्य सूतजीको निर्वाण तिथि हुनाले कुनै काम नगरेर शान्त चित्तले भगवान्‌मा लीन रहने दिन हो, त्यसैले उनको काममा विघ्न नपार्नु भनेको हो ।।

शिक्षा (४४)- हे विजय ! कुनै पनि व्रत बसेको दिन अनि रविवार र चन्दन लगाउने समय बाहेक रित्तै वा व्यर्थ ऐना कसैले पनि नहेर्नू, भारी दोष छ । चन्दनको टीका लगाउँदा भने हेर्न हुन्छ, किनभने श्रीखण्डको टीका ईश्वरको रूप कहिन्छ ।।

गूढार्थ- ऐना कामोद्दीपक कहिएको छ । व्रतमा र रविवारमा समागम निषेध गरिएको हुनाले ऐना नहेर्नु भनको हो । चन्दनले मस्तिष्क ठण्डा राख्न सक्ने हुनाले उत्तेजना आउन सक्तैन ।।

शिक्षा (४५)- हे विजय ! जुन खाटमा आफ्नी धर्मपत्नीसित रात्रिमा सुतिन्छ, त्यसमा अन्य कुनै पुरुषलाई वा आफ्नै भाइ-छोराहरूलाई पनि बस्न नदिनू, दियो भने दोष लाग्दछ ।।

गूढार्थ- कुसुमशर शय्यामा कुसुमवाण बेधियो भने अनर्थरूपी पापले पछ्याउन सक्छ ।।

शिक्षा (४६)- हे विजय ! कसैले पनि कसैसित तिल मागेर नखानू । सकेसम्म कसैले ख्वाए पनि नखानू । खायो भने ठूलो दोष लाग्छ । श्रीकृष्णको यस्तो आज्ञा सुनेर अर्जुनले बिन्ती गरे- हे वासुदेव ! आफ्ना खास मित्रले तिल खान दिए, नखाई भएन र खानैपर्‍यो भने त्यो दोष कसरी निवारण हुन्छ ? अर्जुनले यस्तो बिन्ती गरेको सुनी श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- हे पार्थ ! सकेसम्म कसैले दिए पनि तिल खाँदै नखानू; केही गरी नखाई भएन भने जसको तिल खाएको छ, उसलाई आफ्नू घरमा डाकी तिल खान दिनू । केही गरी जसले तिल ख्वाएको छ, त्यसलाई ख्वाउने अवसर पाइएन भने कुनै ब्राह्मणलाई निम्ता दिएर भोजन गराए, त्यो दोष मेटिन्छ । संसारमा तिल दान गरेको जस्तो पुण्य अर्को केही पनि छैन ।।

गूढार्थ- सन् १९६० मा कुनै अंग्रेज वैज्ञानिकले भनेका थिए, यसै गरी विज्ञानको विकासको वृद्धि चल्दै रह्यो भने तिल र कुशको महत्त्व बुझ्न अझै झण्डै दुइ सय वर्ष लाग्नेछ । त्यसै कारण, यो नूनभन्दा पनि कठिन ऋण हो ।।

शिक्षा (४७)- हे विजय ! जो व्यक्ति दिसा-पिसाब गरेर नधोईकन अपवित्र रहन्छ, त्यस्ता व्यक्तिले अघि-अघि गरेका सबै पुण्य नाशिन्छन् ॥

गूढार्थ- दिसा गरेपछि तुरुन्तै शुची गर्नुपर्छ र हात मट्याउनुपर्छ, नत्र आउँ, रगतमासी, अंकुशे कीराले शरीरमा प्रवेश गरेर सताइरहन्छन् ॥

शिक्षा (४८)- हे विजय ! जो व्यक्ति श्रद्धा-भक्तिपूर्वक एकचित्त भई परमेश्वरको गुणानुवाद वा कथा- पुराण सुन्दछन्, त्यस्ता व्यक्ति मरेपछि वैकुण्ठमा अनेक थरिका सुख-भोग गर्दछन् ॥

गूढार्थ- पुराणका कथा राम्ररी सुनेर तदनुसार आचरण गरे कुनै आपत्ति आइपर्दैन ॥

शिक्षा (४९)- हे विजय ! जो व्यक्ति अर्काले नासो राखेको धन वा केही वस्तु, जसले नासो राखेको छ, उसले माग्न आएको बेलामा, मलाई तैंले कहिले राख्न दिइस् ? भनेर बेइमानी गरी अर्काको नासो धन वा सामान पचायो भने त्यस पापले यस लोकमा त्यस्ता व्यक्तिकी स्त्री बाँझी वा निःसन्तान हुन्छे, मरेपछि त्यस्ता बेइमानले नरक भोग्नुपर्दछ ॥

गूढार्थ- बेइमानीको धनले भित्र पोल्दछ, नासो राख्नेको

श्राप पनि लाग्दछ र त्यो पोलाइ तथा श्रापले पचाउनेको ठूलो हानि गर्दछ ।।

शिक्षा (५०)- हे विजय ! जो व्यक्ति आफ्नी विवाहिता पत्नीलाई त्यागेर रण्डीबाजी गर्दछ वा मैथुनमा लागेका पशु-पक्षीलाई वाधा पार्दछ, त्यस पापले त्यो नरकमा पर्दछ र त्यसका सन्तान पनि सकिन्छन् ।।

गूढार्थ- रण्डीबाजी गरिहिड्दा गाढ़ा माल अन्तै सकिएपछि घरमा सन्तान कसरी हुने ? अनि अर्काको आनन्दमा विघ्न पार्नेलाई सुख कसरी हुने? ।।

शिक्षा (५१)- हे विजय ! असामीको घरमा साहू आएर ताकिदा गर्दा रुपियाँ नपाई म्याद राखेर गयो भने, त्यो ऋण नतिरेसम्म असामीले अन्न-जल खाए-पिए ठूलो पाप लाग्दछ र जन्म-जन्मान्तर दरिद्र भएर कष्ट भोगिरहनेछ ।।

गूढार्थ- साहूमारा कसैको पनि विश्वासपात्र हुँदैन । सबैतिर निन्दित हुन्छ र जता गए पनि ठक्कर खाइरहनुपर्दछ ।।

शिक्षा (५२)- हे विजय ! जो व्यक्ति आफ्ना-नातादार, इष्ट-मित्रको हानि हुने काम गर्दछ, त्यस पापले त्यो मानिस निःसन्तान हुन्छ ।।

गूढार्थ- अफ्ना मानिससित शत्रुता गर्न थाल्यो भने

त्यस्ताको बस्ने ठेगाना कसरी हुने र? जाहान कसरी पाल्ने ?

शिक्षा (५३)- हे विजय ! जो व्यक्ति आफ्नू बढाइँ आफैं गर्दछ, र अरूले आफ्नू प्रशंसा गर्दा प्रसन्न हुन्छ, त्यस्तो व्यक्ति मरेपछि अवश्य नरकमा पर्दछ । अतः आफ्नू बढाइँ आफ्नै मुखले कदापि नगर्नू ॥

गूढार्थ- आफ्नू झूठो तारीफ गर्ने र गुणगान सुनेर मक्ख पर्ने व्यक्तिले कुनै काम गर्न सक्तैन । काम गर्दा असफल भइयो भने अर्काले के भन्नन् भनेर कामै थाल्दैन । त्यस्ताको पैतृक सम्पत्ति लाइकेह्हरूले ठगेर खाइदिन्छन् । अकर्मण्य व्यक्तिले अन्त्यमा माग्नुपर्दछ वा कहीं भतुवा लाग्नुपर्दछ, यही दुःखमयी नरकयातना हो ॥

शिक्षा (५४)- हे विजय ! चर्न लागेकी गाईलाई जो व्यक्ति हकारेर धपाउँछ, त्यस्तो व्यक्ति कहिल्यै दुःखबाट मुक्त हुँदैन र अन्त्यमा सन्तानहीन हुनेछ ॥

गूढार्थ- दूध, दही, घिउ आदि पौष्टिक पदार्थ दिएर जीवनभरि प्रसन्न पार्ने गाई; जन्म दिएर केही महीना मात्र दूध पिलाएर हुर्काउने आमाभन्दा पनि पूज्य छन् । त्यस्ती गाईलाई धपाउने व्यक्ति पछि गोरस नपाएर अवश्य नरकमा (दुःखमा) पर्दछ ॥

शिक्षा (५५)- हे विजय ! जो व्यक्ति छायाका लागि

लगाएका वृक्ष काट्दछ, वा बगैंचा मास्दछ, अथवा पोखरी, कूवा आदिलाई माटोले पुर्दछ, त्यस्तो व्यक्ति अवश्य नरकमा पर्दछ, मुक्ति पाउन्न ॥

गूढार्थ- बाटोका वृक्षहरूमा भूत-पिशाच; छायामा बटुवा र पशुहरू; पातमा कीरा; हाँगाहरूमा चराहरू; टोड्कामा लोखर्के आदि बस्तछन् । त्यस्तै जलाशय पनि अनेक जीवका आश्रय हुन्छन् । त्यस्तो नास्नेलाई तिनको श्रापले बेकामे भएर दुःख पाउनुपर्छ, अतः यी सबै काम पाप हुन् ॥

शिक्षा (५६)- हे विजय ! जो मनुष्य घोडा, गोरु, खसी इत्यादि पशुलाई खसी पार्दछन्, त्यस पापले ती अर्को जन्ममा नपुंसक भई जन्म लिन्छन् । त्यस्ताका सन्तान पनि नपुंसक हुन्छन् । पशुलाई त्यस्तरी खसी तुल्याएको जस्तो ठूलो पाप अरू केही छैन ॥

गूढार्थ- पुनर्जन्म र पापका भोगको प्रत्यक्ष प्रमाण हो- नपुंसकहरू कामपिपासाले छट्पटिइरहन्छन् । यो-भन्दा बढी कष्ट कुनै पनि छैन ॥

शिक्षा (५७)- जो मनुष्य केही धन गरीबलाईरिन दिएर अनेक थरिका-जालझेल गरेर अर्काको जीवनवृत्ति गरेर खाइरहेको जमीन झेल गरेर लिन्छन् , त्यस पापले त्यो व्यक्ति

अन्धो हुन्छ । त्यस्ता मानिसका सन्तान भए पनि यौवनमै मर्नेछन् ॥

गूढार्थ- गरीब-शोषकका सन्तान शैतान भएर उसै शोषकलाई पिरेको या त्यस्ताका सन्तान निकम्मा भएको त व्यवहारमा देखिदै छ ॥

शिक्षा (५८)- हे अर्जुन ! जो मानिस आफूले मान्नुपर्ने आफ्ना बाबु आमा वा आफूले मान्नुपर्ने मान्य जनलाई दुर्वाच्य भन्दछ, त्यसलाई घोर पाप लाग्दछ ॥

गूढार्थ- मान्य जनको दिलको सच्चा सराप या कुभलो चिताइले पिर्नासम्म पिर्छ र दुःख पाइन्छ । यसै दुःखलाई नै पापको फल भन्दछन् ॥

शिक्षा (५९)- हे विजय ! जो व्यक्ति आफ्नू मालिक, अन्नदाता अथवा फौजको अफिसर, आफ्नू बाबु यिनीहरूसित युद्धमा लडाइँ गर्न गएर डरले तिनीहरूलाई छाडेर भाग्यो भने त्यस पापले गर्दा त्यस्ता व्यक्तिको देहमा कुष्ठ रोग भई कीरा परेर अङ्ग गलेर झर्नेछ ॥

गूढार्थ- विपत्तिमा परेकाको श्राप र आफ्नो ग्लानि जुधेर रगत बिग्री कोढ़ फुट्छ र त्यो जन सडी कीरा परी मर्छ, यो नै त्यस पापको फल हो ॥

शिक्षा (६०)- जो व्यक्तिले आफ्नू उमरेमा गंगाजी वा कुनै उत्तम तीर्थमा स्नान गरेको छैन, त्यस व्यक्तिको जीवन यस संसारमा खँलाती जस्तै हो । यसै कारण, पति-पत्नी भएर तीर्थ-स्नान गरेर केही दान-पुण्य गरे अश्वमेध यज्ञ गरेजस्तै फल मिल्दछ र जीवन सुखी रहनेछ । यति सुनेर विजयले सोधे– हे जगदीश ! कसैले स्त्री लिएर हिड्न लोक-लाजले अथवा धनाभावले गर्दा तीर्थस्नान गर्न सकेन भने त्यसले के गर्ने ? तब श्रीकृष्णले भन्नुभयो- हे सखे ! यदि त्यस्तो स्थिति आइलागे पूर्णिमा, संक्रान्ति, व्यतीपात आदि योगमा, औंसीको दिन कुनै नदी वा तलाउ, पनेरा, इनार वा घरमै पनि स्नान गरेर जो सकेको दान-पुण्य गरे, तीर्थ-स्नान गरेजस्तै फल प्राप्त हुन्छ । पहिले गरिएका पापबाट मुक्त भएर उत्तम गति पाइन्छ । हे विजय ! यो कुरा अत्यन्त गुप्त छ, वेदमा जो फल कहिएको छ, मैले त्यही तिमीलाई बताएको हुँ ।।

गूढार्थ – पति -पत्नी भएर कुनै तीर्थमा गई स्नान ध्यान गरेर दान-पुण्य गर्दा अथवा कहिल्यै पनि कुनै पुण्य कार्य गर्दा समयको सदुपयोग र चित्त प्रसन्न हुन्छ । यही पुण्यको पवित्र फल कहिन्छ ।।

शिक्षा (६१)- हे विजय ! कसैले गुप्त रूपमा राखेको सामान के रहेछ भनी सुटुक्क नहेर्नू, यदि कोही पर्दामा बसेको छ भने, कुनै सूचना संकेत नदिई सहसा पर्दा हटाएर नहेर्नू, हेरेमा दोष लाग्दछ ॥

गूढार्थ- पर्दाभित्रको चीज चोरियो भने अथवा पर्दाभित्र रहनेको पर्दाफाश हुँदा मूड़ मोडियो भने अनर्थरूपी आपत्ति आइलाग्छ ॥

शिक्षा (६२)- हे विजय ! जसले भर्खर बियाएकी गाईको दूध त्यसका बाच्छा-बाच्छीको भाग नछाडी निखारेर दुहुन्छ, त्यो मानिस अन्त्यमा सन्तान-हीन हुन्छ ॥

गूढार्थ- बाच्छाबाच्छीको आत्मा तड्पाएको शुद्ध निर्दोष तिनको श्रापरूपी तापले तताएर त्यस अपराधीका सन्तान डढाउँछ ॥

शिक्षा (६३)- हे विजय ! जो व्यक्ति आफ्नी सती पत्नीलाई त्यसै पनि निहुँ खोजेर कूट-पीट गर्दछ, अरू पनि प्राणीलाई कष्ट दिइरहन्छ भने त्यसलाई ठूलो पातक पाप लाग्दछ ॥

गूढार्थ- स्वास्नी दुःखी, अप्रसन्न रहँदा गर्भाधानमा घात पर्छ तथा प्राणीलाई विना-काम सताइरहँदा उनका दुःखी अन्तरात्माको पीडाले पिर्छ ॥

शिक्षा (६४)- हे विजय ! जो व्यक्ति अर्काको अंश वा भाग नदिई जाल-झेल गरी अर्काको भागमा कब्जा गर्दछ, त्यसकी स्त्री बाँझी हुन्छे, कोही सन्तान भए पनि कुकर्मी, बदमाश र दरिद्र हुनेछ, त्यस्ताकी छोरी भए पनि विधवा हुन्छे । त्यसको कुलमा पानी दिने पनि कोही रहन्न । आफू पनि अन्धो भएर आजन्म कष्ट भोग्नेछ ॥

गूढार्थ- अर्कालाई खनेको खाडलमा पापी स्वयं जाकिन्छ भन्ने उखान पहिलेदेखि चलि-आएको हो; अतः जो अर्काको सम्पत्ति हरण गरेर उसलाई अलपत्र पार्दछ, उ एक दिन स्वयं कष्टमा पर्दछ ॥

शिक्षा (६५)- हे विजय ! जो व्यक्ति चन्द्रग्रहण र सूर्यग्रहण लागेको अवसरमा खाने-पिउने गर्दछ, वा मल-मूत्र त्यागदछ, अर्थात् झाड़ा-पिसाब फिर्छ, पानी भरेर राख्दछ वा पानी पिउँदछ, निदाउँछ वा समागम गर्दछ भने त्यसलाई ठूलो पाप लाग्दछ । चन्द्र सूर्यको श्रापले धन सन्तानको सुख पाउँदैन र मरेपछि पनि नरकमा पर्नैपर्दछ ॥

गूढार्थ- सूर्य चन्द्र ग्रहण कालमा किरणको सक्रियताको न्यूनताले गर्दा पूरा पदार्थ र वातावरण दूषित भएको रहन्छ, अतः त्यस बेला खाने - पिउने, दूषित श्वास तान्ने, विचेत झैं

रहने इत्यादिले हानि गर्दछ र त्यसबाट जोगिन नसके ठूलो विपत्तिमा परिन्छ ॥

शिक्षा (६६)- हे विजय ! दिसा गर्न जाँदा जुन पात्रमा पानी लिएर जाइन्छ, त्यो पानीले दिसा धोइसकेपछि बाँकी रहेको पानीले हात-पाउ नधुनू, धोए उसलाई प्रेतले दुःख दिन्छ, किनकि त्यो पानी प्रेतको भाग हुन्छ, तसर्थ दिसा सुमरेर बचेको पानीले हात-पाउ नधुनू, त्यसले ठूलो पाप लाग्दछ ॥

गूढार्थ- चर्पीमा लगेको पानीमा अनेक कीटाणुहरू रुमलिन सक्तछन् । तिनै दुःख दिने प्रेत हुन् । त्यस्तो पानीले धोएको हातले खाना खाँदा ती कीराहरू पेटमा पुगेर रोग उत्पन्न गर्न सक्तछन् । गोडामा टाँसिएर पनि भान्सा-घरमा आउन सक्तछन्; यसै कारणले त्यस्तो पानीले हात पाउ नधुनू भनेको हो ॥

शिक्षा (६७)- हे विजय ! जुन व्यक्तिको सन्तान हुँदैनन्; त्यस व्यक्तिले यस संसारमा जन्म लिएको व्यर्थ छ; त्यस्ताले मरेपछि उसलाई पिण्ड-पानी पनि कोही दिँदैनन् । सोही कारणले अपुतालाई यस लोकमा वा परलोकमा पनि बढिया हुन्न । यस्तो भगवान्ले आज्ञा भएको सुनी विजय अत्यन्त दुःखी भई बिन्ती गर्दछन्- हे प्रभु ! जसको सन्तान छैनन्, त्यस्ता व्यक्तिलाई कसले श्राद्ध -तर्पण गरिदिए उसले पिण्ड-पानी पाउँछ ?

त्यस्ता अपुत्रीको के गरेर गति हुन्छ ? मलाई त्यो आज्ञा गरिबक्सनुहवस् ! यति पार्थले गरेको बिन्ती सुनी भगवान् श्रीकृष्ण प्रसन्नमुख भएर हाँस्तै आज्ञा हुन्छ- हे पार्थ ! यसको एउटा गोप्य कारण छ, जुन देवताहरूलाई पनि राम्ररी थाहा छैन; तर तिमी मेरा परम भक्त हुनाले यो गुप्त कुरा भन्दछु, तिमी एकचित्त भएर सुन- जुन मानिसका पुत्र छैनन्, उसकी पतिव्रता नारीले आफ्ना पतिको शुद्ध मनले श्राद्ध तर्पण गरिदिई भने पनि उसको पतिले पाउँछ र पतिव्रता स्त्रीको राम्रो कर्मले आफ्नू पतिलाई तार्ने मात्र होइन कि उसले पतिको सात कुलसम्मलाई स्वर्गवास गराउँछे । कदाचित् पतिका कुलमा कोही आफ्नू कुकर्मले नरकमा परेका भए पनि त्यस पतिव्रताको पुण्यले मुक्ति पाउँछन् ॥

गूढार्थ- पतिव्रता स्त्रीको महिमा अत्यन्त पवित्र छ । उसले आफ्नू पातिव्रत्यको प्रभावले दुवै कुल उज्ज्वल पार्दछे । त्यस्ती स्त्री जसकी छ, त्यो व्यक्तिको सुसन्तान नभए पनि सर्वत्र सुखी रहन्छ ॥

शिक्षा (६८)- हे विजय ! रविवार, औंसी, द्वादशीका दिन शरीरमा जो तेल लगाउँछ, त्यसलाई ठूलो दोष लाग्दछ, तसर्थ यी तीन दिन तेल नलगाउनू ॥

गूढार्थ– द्वादशी, औंसी र आइतवारमा घस्ने तेल सूर्य किरणद्वारा दूषित रहने भएकोले भरसक यी तीन दिन तेल नलगाउनु, नघस्नु जाती हो ॥

शिक्षा (६९)– हे विजय ! गृहस्थीको घर-वरिपरि पीपल, तित्रीको वृक्ष नलगाउनू किनकि सधैं एकपल्ट पितृदेवता आफ्ना छोराको घरमा हेर्न आउँछन् । ती आउँदा ब्राह्मणहरूले मीठो-मीठो वस्तु खाएको देखे भने प्रसन्न भएर आफ्ना छोरा-नातिलाई आशीर्वाद दिन्छन् । पीपलको वृक्षमा सदा भूत-प्रेत आदिको निवास हुन्छ ; कदाचित् पितृ-देवता आएको अवसरमा भूत-प्रेतलाई देखे भने डरले छोराको घरमा पनि नगएर आशीर्वादको साटो श्राप दिएर परैबाट फर्केर जान्छन् । त्यसै कारण, आफ्नू घरको नगीचै पीपल आदि ठूलो वृक्ष गृहस्थीले नलगाउनू अडीरको तेल पनि पीपलको वृक्षमनि नबाल्नू ॥

गूढार्थ– पीपल र अमिली (तित्री) को पातबाट प्राप्त हुने वानस्पतिक प्राणवायुले तथा पीपलको हावा र अडीरका तेलका धुवाँले प्राणीको जीवनलाई हानि गर्दछ, प्राणवायुमै हानि भएपछि दुःखी हुनमा शंका रहन्न ॥

शिक्षा (७०)– हे विजय ! यो मनुष्य देह ठूलो कष्टले प्राप्त भएको छ अथवा ठूलो तपस्या र पुण्य-फलले पाइन्छ;

मनुष्यले यो यस्तो चोला पाएर पनि कोही अहंकार गर्दछन् भने ती पापात्मा हुन् । किनकि आफ्नू काल कुन वेला आउँछ, आज हो कि भोलि कसैलाई पनि थाहा छैन; यस्तो अनित्य चोलाको विचार नगरी अभिमानले जो मनुष्य नीच कर्म गर्दछन्; फेरि अहिले उमेर सानै छ, अलि बूढो भएपछि धर्म-कर्महरू र भजन-कीर्तन गरुँला, अहिले मजा लिनुपर्छ भन्छन् भने त्यस्ता मनुष्य निश्चय नै पशु-समान हुन्, किनकि यो अनित्य देहको के भरोशा छ । जन्मेपछि अवश्य काम, क्रोध, लोभ, मोह र अहंकार इत्यादिले सदैव ढाक्दछन्, अर्कालाई कष्ट दिने काम कहिल्यै नगर्नू, आफ्नू कर्म-अनुसार भगवान्ले जे जति दिएका छन्, त्यसैमा सन्तुष्ट रहनू, मान वा अपमान, हानि वा लाभ, सुख वा दुःख सबै नै ईश्वरको इच्छा हो भनेर जानी, हर्ष-विष्मात नगरी सम्पूर्ण जीवधारी प्राणी मात्रमा एउटै ईश्वर छ भन्ने देखेर सदासर्वदा सच्चिदानन्द परमात्मामा मन लगाई प्रसन्न चित्तले जप-तप-दान-धर्म गर्नू; किनभने, जब यो चोला छुट्तछ, त्यस बखतमा माता-पिता, दाज्यू-भाइ, इष्ट-मित्र कोही पनि काम लाग्दैनन्, केवल आफूले गरेका राम्रा-नराम्रा काम मात्र सहायक हुन्छन् । साथमा जाने र मद्दत गर्ने कोही पनि हुँदैन । हे सखे ! सुजनले यो कुरा विचार गरेर घटिया काम

कहिल्यै नगर्नू । सदैव राम्रा कर्मले समय बिताउनू ॥

गूढार्थ- काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य- यी छः वटा शत्रुले गाँजेपछि प्राणी जति बल गरे पनि उम्कन सक्तैन; त्यसै कारण, उक्त पाशोबाट उम्कनु छ भने त्यही स्थितिमा साक्षात् परमात्माको ध्यान गर्नुपर्दछ । अनि जब ईश्वरमा मन अटल हुन सक्यो भने त्यो तेजको प्रकाशले सोझै मास्तिर उडेर आकाशमार्गले पारि पुऱ्याउन सक्तछ ॥

शिक्षा (७१)- हे विजय ! जुन व्यक्तिले पीपलको वृक्षलाई प्रतिदिन जल चढाउँदैन र शिवको पूजा पनि कहिल्यै गर्दैन, त्यो व्यक्ति पशु-समान हो भन्न सकिन्छ । त्यसले यो मनुष्य-देह पाएर जन्मनु पनि व्यर्थ छ, भनी भगवान् श्रीकृष्णले आज्ञा भएको सुनी अर्जुन फेरि बिन्ती गर्दछन्- हे वासुदेव ! केही कारण परेर नित्य पूजा गर्ने अनुकूल परेन भने के गर्ने ? अर्जुनको यस्तो प्रश्न सुनेर श्रीकृष्णले आज्ञा गर्नुभयो- हे विजय ! शनिवारको दिन पीपलको जरामा विष्णु, बोक्रामा ब्रह्मा र हाँगाहरूमा शिवजी अनि सबै पातमा तीर्थहरू निवास गर्दछन् । यसै निम्ति सधैं पूजा गर्न असक्त भए पनि प्रत्येक शनिवारको दिन नियमित रूपले श्रद्धासाथ पीपलको पूजा गरी, पीपलको वृक्षमा जल चढाई प्रदक्षिणा गर्ने गर्नू ।

कहिलेकाहीं पीपलको वृक्षमनि ब्राह्मण-भोजन गराई आफूले पनि त्यहीं बसेर भोजन गरे, त्यस पुण्यले उक्त व्यक्तिलाई देवताहरूले आशीर्वाद दिन्छन् । देवताको आशीर्वादले धन-धान्य र सन्तान पनि हुन्छन् । त्यसका सबै मनोकामना पनि पूर्ण हुन्छन् । जन्मभरि सुख सन्तोष पाउनेछ । श्रीकृष्णले यस्तो आज्ञा भएको सुनी विजयले प्रसन्न भई फेरि बिन्ती गरें- हे गोविन्द ! पीपल र शिवजीको पूजाको महिमा सुनेर मन अति प्रसन्न भयो अब अरू पनि त्यस्तै कल्याणकारी उपदेशहरू आज्ञा हवस् । विजयले यति भनेको सुनी श्रीकृष्णले आज्ञा गर्नुभयो- हे सखा ! यो महिमा वेद-वेदान्तमा पनि नभएको, धेरै पुरानो धर्म मैले तिमीलाई सुनाएँ, अरू पनि अनेक धर्मका उत्तम कुरा म सुनाउँछु, एकाग्र भएर सुन ॥

गूढार्थ- शनिवार शनिको प्रभावले अनवरत प्राणवायु छाडिरहने अश्वत्थ वृक्षमा विशेष पर्ने र त्यस दिन बिदाको उत्सव मनाउने भूत-प्रेत-गणलाई ताण्डव नृत्य देखाउने शिवको प्रसन्नताको दिन हुनाले त्यस दिनको पूजा र ध्यानले शिव-पार्वती अति प्रसन्न हुन्छन् । अर्थात् त्यस दिनको पीपलको हावाले विशेष लाभ गर्दछ । पृथ्वी, जल, आकाश, अनल, समीर, सूर्य-चन्द्र शक्तिरूप अष्टमूर्ति शिवको राम्ररी ध्यान

गरेर आगामी सप्ताहको भौतिक उपद्रव जानिराखे राम्रो हुनेछ ।।

शिक्षा (७२)- हे विजय ! जो व्यक्ति स्नान सन्ध्या, पाठ-पूजा समाप्त गर्नासाथ केही अन्य काम नगरी डुम्री र महुआको वृक्षमनि गयो भने- त्यसले त्यस दिन गरेको स्नान-दानको जो पुण्य छ, त्यसको चार भागको एक भाग फल गुल्लर (डुम्री) र महुआको वृक्षलाई जान्छ । यति श्रीकृष्णले आज्ञा भएको सुनी पार्थ बिन्ती गर्दछन्- हे मधुसूदन ! आफूले स्नान-सन्ध्या गर्दा आफूले पाएको पुण्य-फल गुल्लर र महुआको वृक्षमनि जाँदैमा के कारणले चार भागको एक भाग गुल्लर र महुआको वृक्षलाई मिल्दछ? यति विजयले सोधेपछि श्रीकृष्ण भगवान् आज्ञा हुन्छ- हे पार्थ ! नृसिंह भगवान्ले हिरण्यकशिपुको पेट नङ्ले फोर्दा त्यस बखत नृसिंहका नङ्बाट आगाको ज्वाला निस्कन लाग्यो । अनि नृसिंह भगवान् छक्क परी त्यस बखत चारैतिर हेर्दा गुल्लर र डुम्री दुइ वृक्षमात्र सामुन्ने देखेर नृसिंहजीले आफ्ना नङ्बाट निस्केके आगोको ज्वाला निभाउन तिनै गुल्लर र महुआको वृक्षमा आफ्ना दुवै हत्केलाले हान्दा भए । त्यसै बखत नृसिंहजीको नङ्बाट निस्केको आगोको ज्वाला हरायो । अनि नृसिंहजी ती गुल्लर र महुआको वृक्षदेखि प्रसन्न भएर

भन्दा भए अबदेखि स्नान-संध्या पूजा पाठ गर्दा भएको पुण्य-को चार खण्डको एक खण्ड पुण्य तिमी दुवै वृक्षले पाउनेछौ" भन्ने वरदान दिनुभयो । त्यसै कारण स्नान-सन्ध्या, पूजा-पाठ गरेपछि अर्को केही काम नगरी गुल्लर र महुआको रूखमनि कदापि नजानू, केही गरी गइयो भने चार भागको एक भाग पुण्य गुल्लरको र महुआको वृक्षलाई जान्छ । श्रीकृष्णले यस्तो आज्ञा भएको सुनी विजय बिन्ती गर्दछन्- हे नाथ ! केही कहीं बिर्सिएर कोही व्यक्ति गयो भने के गरेर आफूले गरेको स्नान-सन्ध्या र पूजा-पाठको पुण्य-फल गुल्लर र महुआको वृक्षलाई जाँदैन? यति पार्थले बिन्ती गरेको सुनी भगवान् श्रीकृष्ण आज्ञा गर्नुहुन्छ - हे पार्थ ! केही गरी भूलले स्नान-सन्ध्या, पूजा-पाठ सक्नेबित्तिकै जो डुम्री र महुआको वृक्षमनि जान्छन्; ती व्यक्तिले नृसिंहजीको नाम तीनपल्ट जपे भने स्नान-सन्ध्या, पूजा-पाठ गरेको फल गुल्लरको र महुआको वृक्षलाई जाँदैन ।।

गूढार्थ- आसुरी शक्तिले लबलबाएको ईश्वरीय क्रोधरूपी रस(मद)ले रसिएका डुम्री र महुआ मादक फल-फूल दिने वृक्ष हुन् । मादक पदार्थ अपवित्र हो, त्यसको गन्धले दिमाग बिगार्छ, प्रसन्न चित्त भएको वेला मादक गन्ध दिमागमा घुसे चौथाइ

दिमाग बिग्रिहाल्छ । यदि यस्तो भयो भने तुरुन्तै "मनुष्यमा पशुशक्ति" भन्दै आतुरिएर कुलेलम ठोक्नू, दिमाग तुरुन्तै तर हुन्छ ॥

शिक्षा (७३)- हे विजय ! नित्यको स्नान-सन्ध्या, पूजा-पाठ सकेर तुरुन्त गई खाटमा बस्यो अथवा कसैसित भेट-घाट गरेर कुराकानी गऱ्यो भने त्यो पाठ-पूजा गरेको पुण्यको फल नाशिन्छ । त्यसै कारण, केही चीज अलिकति भोजन गरेर मात्र खाट वा पलंगमा बस्नू, अनि कसैसित भेट-घाट र कुराकानी गर्न जानू ॥

गूढार्थ- पूजा-पाठ आदि धर्म-कार्य केही नखाई भोकै गर्नुपर्दछ, त्यति वेला नुहाएपछि केही पाए खाने थिएँ भन्ने तल-तल लागेको हुन्छ । ठीक त्यतिखेर खाटमा बस्न गयो भने बिस्तारै पल्टन मन लाग्दछ र पल्टेपछि निद्राले छोप्दछ, खालि पेटले कुराकानी गर्न पनि मन पर्दैन । त्यसै कारण केही भोजन गरेर मात्र अरू सबै काम गर्नू ॥

शिक्षा (७४)- हे विजय ! आँपको वृक्ष या बगैंचामा लगाएका फल-फूलका वृक्ष कहिल्यै पनि काट्नु हुँदैन, जसले काट्दछ त्यस व्यक्तिलाई ब्रह्महत्या गरेको पाप लाग्दछ । त्यस्तै; आँपको वृक्ष रोप्न वा बगैंचा लगाउन सके हजार

यज्ञको फल प्राप्त हुन्छ । त्यसै कारण बगैंचा लगाउन नसके पनि जीवनमा उत्तम स्थानमा राम्रा फलका पाँच वृक्ष अवश्य लगाओस् त त्यस व्यक्तिले मनुष्य जन्म पाएको सफल हुन्छ । मनुष्य भई मेवा (छोहडा-काजु आदि) को एउटा वृक्ष पनि लगाउन सकेन भने त्यसलाई धिक्कार छ । हे विजय ! मेवाको वृक्ष लगाएको पुण्य त अश्वमेध यज्ञ गरेको बराबर मानिन्छ । किनकि जब पानी पर्दछ त्यस-बखत आफूले लगाएका मेवाका वृक्षबाट जति थोपा पानी भूमिमा पर्दछ, उति गाई-दान गरेको पुण्य त्यो वृक्ष लगाउने व्यक्तिलाई मिल्दछ । जस्तै-पतिव्रता नारीले आफ्ना पतिको सेवा गर्दा अक्षय पुण्य पाउँछे; त्यस्तै ती मेवाका वृक्ष लगाउने व्यक्तिलाई पनि अक्षय पुण्य मिल्दछ । मेवाको वृक्ष लगाउनाले जति पुण्य मिल्दछ, त्यसको महिमा कसैले पनि वर्णन गर्न सक्तैन । मेवाको वृक्ष लगाउने मानिसको पाँच पुस्ता पछाडिका र पाँच पुस्ता अगाडिका दश पुस्तासम्मका पितृहरू नरकमा परेका भए पनि वैकुण्ठ धाम जान्छन् ॥

गूढार्थ – आँप वा मेवा (काजू, पेश्ता, बदाम, किसमिस, नारियल, छोहोडा ) आदि तागत दिने फल मानिन्छन्, त्यस्ता वृक्षले धेरै व्यक्तिको उपकार हुन्छ, त्यस्ता उपकारी वृक्ष काट्नाले

अनेक पाप लाग्न सक्दछ । शक्ति भए, त्यस्ता फलका वृक्ष लगाउनू, नसके पनि केवल पाँच वृक्ष लगाइदिइराखे भविष्यका व्यक्तिलाई उपकार गर्नेछ र त्यसको पुण्य ती वृक्ष लगाउनेलाई सहजै प्राप्त हुन्छ ॥

शिक्षा (७५)- हे विजय ! जुन व्यक्तिको घरमा स्त्री बाँझी छ र सन्तान कोही छैन भने त्यस्ता व्यक्तिले यस संसारमा जन्मनु वा बाँच्नु व्यर्थ छ । बाँझी स्त्रीले दिएको पानी अन्न खानेलाई महादोष लाग्दछ । त्यस पापले गर्दा त्यो बाँझी नारीले दिएको अन्न पानी खाने व्यक्तिले धेरै कालतक नरक भोग गर्नुपर्दछ । त्यसको मुक्ति कहिल्यै हुन सक्तैन, यसै जन्ममा पनि बाँझी स्त्रीले दिएको अन्न पानी खानाले मुख गह्नाइरहन्छ-यति श्रीकृष्णले आज्ञा भएको सुन्दा अर्जुन बिन्ती गर्दछन्- हे वासुदेव ! यदि कुटुम्बकहाँ केही कामले जानुपर्दा बाँझी स्त्रीले दिएको अन्न-पानी नखाए पनि कुटुम्बको अपमान हुने, खाउँ भने महापाप लाग्ने, त्यस्तो परेमा के गर्नु ? भन्दा श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- हे विजय ! नाता-कुटुम्बको घरमा जाँदा बाँझी स्त्रीले दिएको नखाई भएन भने भोजन गर्दा पहिलो गाँस मुखमा हाल्ने बखतमा अनन्त शक्तिसम्पन्न परमेश्वरको मनले ध्यान गरी, उनै सम्पूर्णको पाप

नाश गर्ने ईश्वरसित मनले प्रार्थना गरी पहिलो गाँस खाना खाँदा, अनि दोस्रो गाँस खाँदा ज्योतिःस्वरूप सबको कल्याण गर्ने भएका साम्ब-सदाशिवको मनले ध्यान गरी अर्को गाँसलाई भूमिमा जल छर्की त्यसपछि आफूलाई इच्छा लागेजति खानू त बाँझी स्त्रीका हातको अन्न जल खाए पनि केही दोष छैन, झन् सम्मान बढ्दछ ।।

गूढार्थ- बाँझी स्त्रीको रगतमा कुनै विषाक्त वस्तु हुनाले नै शुक्राणु टिक्न नसक्नाले नै बाँझी रहन्छे, त्यस्तो विषयुक्त हातले पकाएको खाना पनि दोष-रहित हुन सक्तैन, खानाले हानि गर्दछ । त्यस हानिबाट परमात्माको शक्तिले मात्र रक्षा गर्न सक्तछ ।।

शिक्षा (७६)- हे विजय ! जो व्यक्ति अर्काले दिएको पानीको लोहोटा, गिलास भूमिमा नराखी पानी पिउँछ, त्यसलाई ठूलो दोष लाग्दछ, अतः कसैले पनि पानी पिउन दिए; एकपल्ट भूमिमा राखेर मात्र त्यो पानी पिउनू, त्यसमा केही दोष लग्दैन।।

गूढार्थ- दिनेले कस्तो हातले समातेको छ, पानी सफा छ कि छैन, राम्रोसित जाँचेर निरीक्षण गरेर मात्र पिउनुपर्छ ।।

शिक्षा (७७)- हे विजय ! यदि आफूले खाएको जूठो भाँडो नमाझी, आफूले खाएर रहेको अन्न त्यही भाँडामा राख्यो

भने पनि त्यसलाई ठूलो दोष लाग्दछ । अन्न देवताको श्रापले त्यो सदा दुःखी र दरिद्री रहनेछ ।।

गूढार्थ- अर्कालाई आफ्नू जूठो दिंदा त्यस जूठोमा सरेका कीटाणुले उसलाई हानि गर्दछ, यो कर्तव्य होइन र अन्न बर्बाद गर्नु पनि अनुचित हो । अन्नमा प्राण धारण गर्ने शक्ति हुनाले खेर फाल्नु पनि जीवन मिल्काउनु समान हो ।।

शिक्षा (७८)- हे विजय ! जो मनुष्य आफ्नू घरको पिंढी-आँगनमा दिनहुँ कसिंगर बढारी घर सफा राख्दैन; त्यो व्यक्ति देवताको श्रापले छः महीना-भित्रै कंगाल वा महादरिद्र हुन्छ । मानिसले यो कुरा पनि जान्नुपर्दछ, त्यो के भने बाबुले गरेको पाप छोराले, छोराले गरेको पाप बाबुले पनि भोग्नैपर्दछ। त्यस्तै आफ्नू पतिको पापले पत्नीले पनि नरक भोग्नुपर्दछ ।।

गूढार्थ- कसिंगरले भरिएको घरमा अनेक रोगका कीटाणुहरू रहन्छन्, त्यस्तो घरमा आउने- जाने बस्ने सबै रोगी हुन सक्तछन्, अतः त्यस्तो घरमा आउन-जान पनि इष्ट-मित्रले मन पराउन्नन् ।।

शिक्षा (७९)- हे विजय ! जो व्यक्ति आलस्यले वा जाडोको डरले नदी, तलाउ वा कूवामा नगएर, घरमै तातोपानीले स्नान गर्दछ, त्यसले स्नान गरेको फल छैन । यति श्रीकृष्णले

आज्ञा भएको सुनी फेरि विजयले बिन्ती गरे- हे मधुसूदन ! नदी-कूवा नगीच छैन भने के गर्ने ? अर्जुनले यस्तो बिन्ती गरेको सुनी भागवान् श्रीकृष्णले भन्नुभयो- हे पार्थ ! नदी, कूआ पर हुनाले स्नान गर्न जान सकिएन र घरमा तातो पानीले स्नान गर्नैपर्‍यो भने 'जय गंगे !' भनेर गंगाको सम्झना गरी स्नान गर्ने जलमा हात नचोभी स्नान गर्‍यो भने पनि त्यसलाई गंगास्नान गरेको फल मिल्दछ । स्नान गर्ने जलमा हात चोभल्यो भने मदिरा जस्तै हुन्छ । हे पार्थ ! यो मैले भनेको धर्मको शिक्षा राम्ररी बुझ्न पनि कठिन छ, केही गरी बुझे पनि मैले भनेअनुसार गर्न पनि झन् कठिन छ । जो मनुष्य, भगवान्को भक्ति र उत्तम बुद्धिमा चल्दछ, त्यही व्यक्ति मात्र मैले भनेको धर्म-शिक्षातिर मन-चित्त लगाउनेछ । यति श्रीकृष्णबाट आज्ञा भएको सुनी फेरि पार्थ निकै व्याकुल भएर बिन्ती गर्दछन्- हे मुरारे ! हजुरबाट आज्ञा भएको यो सम्पूर्ण धर्म-शिक्षामा मैले केही मात्र बुझें र गर्न पनि सक्दछु; तर केही भने बुझिनँ र गर्न पनि सक्तिनँ । कस्ता रीतले अन्त्य समयमा मेरो मुक्ति होला? यसरी अत्यन्त काँतर बनी अर्जुनले बिन्ती गरेको सुनी श्रीकृष्ण भगवान् आज्ञा गर्नुहुन्छ- हे पार्थ ! कुनै कुराको

पनि तिमी मनमा चिन्ता नगर ! तिमीलाई मैले जति धर्म-शिक्षा सुनाएको छु, भक्तिपूर्वक त्यसै अनुसार गर्‍यौ भने पनि यो संसार- समुद्रबाट परमपार भई वैकुण्ठ-वास गर्नेछौ ।।

गूढार्थ- नदी, तलाउ आदिमा स्नान गर्न जाँदा बाहिरको प्रातःकालीन बतास शरीरमा प्रवेश गर्न पाउँदछ । बग्दो वा प्रशस्त निर्मल जलमा स्नान गर्न पाइन्छ । घरमा तातो पानीले स्नान गर्दा रोमकूप र नेत्रज्योति दुर्बल हुन्छन् । फेरि घरमा अड्कलेको पानीले स्नान गर्दा पानी पुग्दछ कि पुग्दैन भन्ने शंका बनिरहन्छ ।।

शिक्षा (८०)- हे विजय ! जो व्यक्ति स्नान गरेर चन्दनको टीका लगाउँदैन, त्यसले स्नान गर्नु - भैंसीले आहाल बस्नु वा हात्तीले जीउ पखाल्नु जस्तै हो । चन्दन नलाउने जन यदि ब्राह्मणै भए तापनि त्यस्तालाई नमस्कार प्रणाम नगर्नू, तिलक नलाएका विप्रलाई नमस्कार गर्‍यो भने दोष लाग्दछ, तिलक नलगाउने व्यक्तिलाई देवता र यमदूत पनि रिसाएर हेर्न थाल्दछन् ।।

गूढार्थ- स्वच्छ ललाटमा श्रीखण्डको चन्दन लगाउनाले मस्तिष्क शीतल रहन्छ । ध्यान-चिन्तनमा मन एकाग्र हुन्छ ।

चिन्तन र मनन नै धर्म मात्रै ब्राह्मणले चन्दन लगाएन भने, त्यो अधर्मी हो । अधर्मीको मुख हेर्नु पनि पाप हो ॥

शिक्षा (८१)- हे विजय ! जो व्यक्ति मिथ्या विषय-वासनामा डुबेर प्रत्येक क्षण मनमा अनेक थरिका तर्क गरी चिन्तारूपी समुद्रमा डुबिरहन्छ; त्यस्ता व्यक्तिले विपनामा त परै जाओस् सपनामा पनि सुख पाउन सक्तैन । त्यसै कारण, जात्रै व्यक्तिले मन-कथा मात्र नगरी कर्तव्य पालन गरिरहेर अकर्मण्य कहिल्यै नरहनू । जसको जस्तो कर्तव्य छ, त्यसलाई त्यसको उस्तै फल अवश्य प्राप्त हुन्छ । सुख-दुःख आउनु जानु त सांसारिक धर्म हो; जुन वेला जस्तो पर्दछ, त्यो सबै धैर्यपूर्वक सहनुपर्दछ र जगदीश्वर भगवान्‌की ध्यान भक्तिपूर्वक गरिरहनुपर्दछ ॥

गूढार्थ- कुनै काम गर्दै नगर्ने, केवल मनकथा (तर्क-चिन्तन) मात्रमा डुबिरहन्छ भने त्यस्तालाई सुख-शान्ति कसरी प्राप्त हुन सक्छ ? कर्तव्य गर्दागर्दै पनि त्यसको फल प्राप्त भएन भने त्यस कार्यमा त्रुटि जानेर जागा रहनुपर्दछ ॥

शिक्षा (८२)- हे विजय ! यो मनुष्य देह सहजै मिल्दैन, ठूलो कष्टले पाइन्छ; तसर्थ, पुग्छ भने भोजन गर्दा सधैं दहीसित

भोजन गर्नू, पुग्दैन भने अमावास्या, पूर्णिमाको दिन अवश्य दही-भात खानुपर्दछ, त्यस दिन दहीसित भोजन गरेको ठूलो पुण्य छ ।।

गूढार्थ- दहीका साथ भोजन गर्नाले सधैं आँत सफा रहेर यो मनुष्य शरीर निरोगी र दीर्घायु हुन्छ ।।

शिक्षा (८३)- हे विजय ! जो व्यक्ति मसूरीको दाल, सेतो भण्टाको तरकारी र लसुन खान्छ, त्यो व्यक्ति ती वस्तु खाएको एक्काईस दिनभित्रै मऱ्यो भने नरकमा पर्दछ । किनकि यिनको बोक्रा, बीजको प्रभाव एक्काईस दिनसम्म उदारमा रहिरहन्छ । तसर्थ असरभित्र नै मर्नु उत्तम होइन । यति सुनेर पार्थले बिन्ती गरे- हे मुरारि ! कसैले भूल-चूकमा यी तीनमध्ये एक पनि खायो र मर्न आँट्यो भने त्यो दोष निवारण गर्ने के उपाय छ ? यति सुनेर भगवान् श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- हे अर्जुन ! यो तीन चीजमा एक चीज पनि भूल-चूकमा जसको पेटमा पर्दछ, त्यस व्यक्तिले गंगाजल पिउनु त त्यो तीन चीज खाएको पापबाट मुक्त हुनेछ ।।

गूढार्थ- गंगाजल कीटाणुरहित अति उर्वरक र निर्मल हुनाले अत्यन्त पवित्र मानिन्छ । गंगाजल पेटमा पार्नासाथ सबै

दोष नाशिदिन्छ र कष्ट पाउनु पर्दैन ।।

शिक्षा (८४)- हे विजय ! जसको घरमा चौबीसै घण्टा घिउ वा तिलको तेलमा बत्ती बलिरहन्छ, पितृ र देवताको आशीर्वादले त्यो घर-मालिकलाई धन,सन्तान सधैं परिपूर्ण भइरहनेछन्, परलोकमा पनि उत्तम गति प्राप्त हुनेछ ।।

गूढार्थ- निरन्तरको ठण्डा ज्योतिका संसर्गले चित्त माझिन्छ र सफा चित्तमा कल्पनाशक्ति जाग्दछ । कल्पना कामद्वारा साकार भएपछि धन त स्वयं ओइरन्छ । कल्पनैद्वारा सन्तान हुने र स्थायी रहने उपाय पनि जान्न सकिन्छ ।।

शिक्षा (८५)- हे विजय ! जो व्यक्ति आफूले खाएर रहेको जूठो केही बेरपछि फेरि आफैले खान्छ अथवा अरूलाई खान दिन्छ भने, त्यो महापापले गर्दा उ सधैं दुःखी वा दरिद्र रहनेछ ।।

गूढार्थ- खाएर छाडेको जूठोमा केही समयमै अनेक हानिकारक कीटाणु परिसकेका हुन्छन् । त्यस्तो वस्तु खाएर रोगाइन्छ र धन व्यय हुन्छ; अनि आफूले गर्दा अरूलाई पनि दुःखी भएको देख्नुपर्दछ । जो उत्तम मानिन्न ।।

शिक्षा (८६)- हे विजय ! जो व्यक्ति बत्ती नै नबाली

अन्धकारमा भोजन गर्दछ अथवा खाँदा बत्ती निभ्यो भने पनि बत्ती नबाली खाइरहन्छ, त्यस पापले त्यो मानिस सन्तान र धनको सुख पाउन सक्तैन । अन्धकारमा गरेको भोजन प्रेत-भोजन भनिन्छ ॥

गूढार्थ- अन्धकारमा केही विषाक्त वस्तु परेर भोजन दूषित पारिदिन्छ । कतै यस्तो पऱ्यो भने आपत्ति पर्न सक्तछ, त्यसै कारण, उज्यालोमा खानुपर्दछ ॥

शिक्षा (८७)- हे विजय ! जो व्यक्ति आफूले बाँधेको पगडी (फेटा) अर्कालाई बाँध्न दिन्छ, त्यसलाई ठूलो दोष लाग्दछ । किनकि आफूले बाँधेको पगडी जसले बाँध्यो, आफ्नू बुद्धि सबै उसैलाई जान्छ । उसको बुद्धि आफूतिर आउँछ । तसर्थ, जान्ने व्यक्तिले आफ्नू शिरमा बाँधेको पगडी कसैलाई नदिनू ॥

गूढार्थ- आफ्नू पगरी वा टोपी अरूलाई दिदा आफ्नो टाउको घामले वा स्याँठले सेकिन्छ र आच्छु-आच्छु परेर होशै हराउँछ, अनि लाउनेको टाउको सुरक्षित भै बेहोशी बिलाउँछ ॥

शिक्षा (८८)- हे विजय ! कहिल्यै पनि उत्तरतिर सिरान

गरी नसुत्नू, सुते महापाप लाग्दछ । तसर्थ उत्तरतिर सिरान वा दक्षिणतिर पाउ पारी सुत्नु हुँदैन ।।

गूढार्थ- उत्तरी ध्रुवीय चुम्बकको अति आकर्षण तालुमा परी नराम्रा नराम्रा कष्टदायी सपना देखिन्छन् । यदि आकर्षण आफ्नू सहन-शक्तिको बाहिर हुन गयो भने हृदयगति नै ठप हुन बेर लाग्दैन । यो नै महापाप यानि महाफसाद हो ।।

शिक्षा (८९) - हे विजय ! छोरी चार वर्षको उमेरसम्म पार्वती कहिन्छे । अनि छः वर्षको उमेरसम्ममा देवकन्या र नौ वर्षकी भएपछि कन्या कहिन्छे । यिनै यिनै उमेरमा छोरीको कन्यादान गरिदिए, ठूलो यज्ञ गरेको फल मिल्दछ ।। बाह्र वर्षभन्दा बढी भई भने र पनि विवाह गरिदिएन भने बाबु-आमालाई महापातक लाग्दछ, बाह्र वर्षपछि कन्यादान गरे पनि केही फल प्राप्त हुँदैन ।।

गूढार्थ- यो द्वापर युगको कुरा होला । त्यस बखत बाह्र वर्षकी हुँदा कुमारीहरू यौवनवती भइसक्दथे । त्यसैले उस बखत त्यो नियम उचित थियो । हिजोआज कलियुगमा द्वापरको भन्दा आधा समय खिइसकेको हुनाले नौको साटो, अठार वर्ष लिनुपर्दछ । यति खेर अठार नाघेर चौबीस-पचीसका हुनु,

द्वापरमा नौ वर्ष नाघेर पन्ध्र सोह्र वर्ष हुनु जस्तै मान्नुपर्दछ ॥

शिक्षा (९०)- हे विजय ! जुन अरूले लगाइसकेको धोती शिरमा पगरी बाँध्दछ, त्यसका जन्मभरि गरेको पुण्य नष्ट भई उसले पापमा अल्झेर मरेपछि अघोर नरक-भोग गर्नुपर्दछ । त्यसका पितृहरू पनि नरकवासी हुन्छन्; त्यस्ताले पृथ्वीमा जति पाइला टेक्दछ; त्यति लात गाईलाई हाने-बराबर पाप लाग्दछ ॥

गूढार्थ- शरीरका बाहिरी अधःकीटाणुले उत्तमाङ्गमा दखल गरे भने ख्वैरो आदि नराम्रा रोगरूपी पाप लाग्छ। पहिलेको निरोगता नाशिन्छ । पहिले निको भएको रोग पनि फेरि जाग्छन् । पाइलै-पिच्छे अर्थात् प्रतिक्षण दुःखी भइरहन्छ ॥

शिक्षा (९१)- हे विजय ! बासी जलले पितृहरूलाई तर्पण दिनु हुँदैन । त्यो तर्पण रगतले गरे-जस्तै हुन्छ । त्यस्तो अपवित्र जलले तर्पण गर्नेलाई पितृले श्राप दिन्छन् । त्यस्तो बासी जलले तर्पण गर्नेलाई मरेपछि यम-दूतहरूले लगेर रगतको कुण्डमा फालिदिन्छन् ॥

गूढार्थ- बासी पानीमा कीटाणुको बाहुल्य रहन्छ, त्यस्तो

पानीले पितृ-(जीर्ण) हरूलाई तर्पण गर्दा अर्थात् तर पार्दा तिनको रगत बिग्रिएर दुःख पाउँछन् र प्याउनेलाई सराप्छन् अर्थात् संक्रामक वायुरूप यमदूतद्वारा तिनका सन्तानलाई पनि त्यो रोग सरेर सताइरहन्छन् ।।

शिक्षा (९२)- हे विजय ! सकेसम्म मनुष्यले एउटा सुनको आभूषण हातमा वा घाँटीमा अवश्य लगाइराख्नु राम्रो हो । स्नान गर्दा सोही सुनका गहनामा जल परेर आफ्नू स्नान हुन्छ । सुन-पानीले स्नान गर्नु, गंगाजलले स्नान गरे-समान हो ।।

गूढार्थ- शुद्ध सुनले पनि पानीका कीटाणु नाशेर विशुद्ध पार्छ । विशुद्ध पानी रोगनाशक र स्वास्थ्यदायक हुन्छ ।।

शिक्षा (९३)- हे विजय ! तीर्थमा गएर स्नान गर्नुभन्दा पहिल्यै लुगा पछार्नु महापाप हो । तसर्थ, तीर्थमा गएर पहिले स्नान गरी, अनि धोती रूमाल पछार्नुपर्छ ।।

गूढार्थ- फोहोर लुगा धोएपछि पानी गन्दा हुन्छ । त्यस्तो गन्दा पानीमा न्वाहुनाले रोग लाग्छ, यो रोग लाग्नु नै पापको फल हो ।।

शिक्षा (९४)- हे विजय ! कुनै पनि तीर्थमा जो व्यक्ति

स्नान गर्न जान्छ, पहिले स्नान गरेर पितृलाई तर्पण दिनुपर्छ । तीर्थस्नान गरेर तीर्थको पवित्र स्थलमा पितृहरूलाई तर्पण दिएन भने पितृका श्रापले उसले तीर्थ गरेको केही पुण्य पनि पाउन सक्तैन ।।

गूढार्थ- अनधिकारी व्यक्तिलाई तीर्थ गर्ने विधान छैन, तीर्थ जानु भनेको अर्थ हो-उहाँ-उहाँका अनेक गुण भएको जलले शरीर शुद्ध पारेर, संसारलाई अनित्य ठानेर, आफू पनि आफ्ना पूर्वज जस्तै विलीन होइन्छ भन्ने कुरा नबिर्सी उनीहरूलाई स्मरण गर्दै तीर्थे जल अर्पण गर्दै विषय-वासना फालेर उनको अनुसरण गर्नु हो ।।

शिक्षा (९५)- हे विजय ! जो मनुष्य मुर्दालाई गंगामा वा कुनै तीर्थ-स्थानमा लगी त्यो मुर्दा नजलाई जलमा बगाइदिन्छन् अथवा अलि-अलि जलाई पूरा भस्म नपारी जलमा बगाइदिन्छन्, त्यस्ता मलामीलाई घोर पाप लाग्दछ । ती मरेपछि उनले नरक यातना भोग्नैपर्दछ; तसर्थ, श्मशानमा लगेका मुर्दालाई मलामीहरूले भस्म बनाई परेवा जत्रो शेष राखी जलमा बगाउनुपर्दछ । मुर्दा पोलेको स्थानमा सात दिनसम्म कुकुर बिरालाले छोलान् भनी रक्षा गर्नुपर्दछ । अनि आठौं दिन स्नान

गरी मुर्दा पोलेको खरानी पखाली तिलाञ्जलि दिई मुर्दा पोलेको स्थान शुद्ध पाऱ्यो भने ती मलामीहरूलाई संसारका समस्त तीर्थहरूमा स्नान गरेको पुण्य मिल्दछ । मरेको व्यक्ति पनि सबै मलामीहरूलाई आशीर्वाद दिएर स्वर्ग जान्छन् ।।

गूढार्थ- लाशलाई माटोमनि गाडिदिनुपर्दछ वा पोलेर खरानी पारिदिनुपर्दछ, कहिल्यै पनि बगाउनु वा त्यसै फालिदिनु हुँदैन । माटोमनि पुर्ने काम पनि उत्तम मानिन्न, किनभने कालान्तरमा यसले धेरै भूमि बरबाद पार्दछ । लाशको राम्रो संस्कारले त्यसबाट रोग फैलिन सक्तैन । नभए चेचक, महामारी आदि रोग पनि त्यसको दुर्गन्धले फैलिन सक्तछ । अतः मलामीहरूले त्यस्तो उत्तम जलाउने काम गर्नु पुण्यदायक हो । त्यति गर्न नसके आफू पनि विपत्तिमा पर्न सकिन्छ ।।

शिक्षा (९६)- हे विजय ! घाम लागेको अवसरमा पानी पऱ्यो भने अर्थात् बादलले नछेकिएर एकातिर सूर्य-किरण आइरहेको र अर्कोतिर पानी पनि परिरहेको स्थितिलाई घाम-पानी भन्दछन् । त्यस्तो घाम-पानीमा स्नान गर्नु गंगा-स्नान गर्नु जस्तै हो । अझ सूर्योदयको अवसरमा घाम-पानीमा नुहाउन पाए उत्तम हुन्छ । त्यस अवसरको घाम-पानीमा नुहाउन

देवताहरू पनि दुर्लभ मान्छन् ॥

गूढार्थ- घाम-पानीमा विशेष प्राणवायु रहन्छ । सूर्योदयको वेलाको वातावरणमा सधैं प्राणवायु विशेष रहन्छ नै । अझ त्यसमाथि घाम-पानी थपिए त त्यस प्राणवायुको गुणको गरिमा गाउने कुरै छैन ॥

शिक्षा (९७)- हे विजय ! सूर्यास्तको अवसरमा खानेकुरा खानु अथवा पानी पिउनु पनि महादोष छ । किनकि त्यस बखत सूर्य र दैत्य(अन्धकार)को संग्राम चल्दछ । त्यसकारण, मनुष्यले उक्त समयमा ईश्वरको ध्यान चिन्तन-बाहेक अरू केही काम नगर्नू, त्यस बेला सुत्नु पनि महापाप छ ॥

गूढार्थ- सूर्यास्तको समय नै तातो वातावरण चिसो हुँदै जाने समय हो । प्रातःको समय चीसोमा तातो बढ्दै जाने हुनाले सुधामय हुन्छ । बेलुकाको वातावरण तातोमाथि चीसो पर्ने हुनाले राम्ररी चीसो नभएसम्म विषमय रहन्छ । त्यस्तो अवसरमा खान-पान गर्नुभन्दा, भगवानको स्मरण गर्नु उत्तम हुन्छ ॥

शिक्षा (९८)- हे विजय ! जो व्यक्ति रोटी खाँदा हातमा लिएर खान्छ, त्यो व्यक्ति अत्यन्त शीघ्र दरिद्र हुनेछ ॥

गूढार्थ –सकेसम्म जे खाए पनि हातले नखानू, चम्चाले खानु उचित हुन्छ । हातले खाना उचाल्दा खानामा हातको मैलो वा पसीना टाँसिन सक्छ; पसीना देहको विकार हो, खानु हुँदैन । यसको अवहेलना गरे दरिद्री होइन्छ ।।

शिक्षा (९९)- हे विजय, जो व्यक्ति अर्काको धन-सम्पत्ति देखेर ईर्ष्या गर्दछ, त्यो मानिस सदैव दरिद्री रहनेछ । मरेपछि रौरव नरकमा फालिन्छ र अर्को जन्ममा पनि अपुत्री हुनेछ ।।

गूढार्थ- अर्काको डाह गर्ने मान्छे डाहले आफै डढ्छ र क्यै गर्न नसकेर दरिद्री हुन्छ, दरिद्री भएकोले दुःखी हुन्छ, डाहका रापले शुक्राणु डढेर अन्त्यमा उ अपुतो हुन्छ ।।

शिक्षा (१००)- हे विजय ! जसको यस जन्ममा सन्तान हुँदैनन्, त्यो मानिसले मरेपछि नरक भोग्नुपर्दछ । अर्को जन्ममा पनि त्यसका सन्तान हुन्नन् ।।

गूढार्थ- अपुतो पीरैपीरले मर्छ, पीरैमा पिरोलिइरहन्छ, पीरैले पोलेर शुक्र (वीर्य) दूषित हुन्छ र फेरि फेरि पनि अपूतो नै हुनेछ ।।

शिक्षा (१०१)- हे विजय ! स्त्री सुत्केरी हुँदा बालक जन्मिएको एघार दिनमा चोखिए पनि पैंतालीस दिनसम्म त्यसले

छोएको अन्न-जल नखानू । पैंतालीस दिन नपुगी खायो भने आफ्ना पितृहरू नरक पर्दछन् भनी श्रीकृष्णले आज्ञा भएको सुन्दा विजयले फेरि यो कुरा सोधे- हे वासुदेव ! जो मानिस कंगाल छ, घरमा गर्ने अर्को कोही छैन; पैंतालीस दिनसम्म सुत्केरीको हातबाट अन्न-जल नखाई त्यसको निर्वाह चलेन भने कसो गर्ने ? अनि श्रीकृष्णले उत्तर दिनुभयो- हे पार्थ ! तेह्र दिन बितेपछि नदी वा गंगामा गई सुत्केरी स्त्रीले स्नान गरी आफ्नू शक्ति-अनुसार दान-पुण्य गरिदिई भने सुत्केरी भएको दोष जान्छ भनी श्रीकृष्णले आज्ञा भएको सुनी अर्जुन निकै प्रसन्न भई बिन्ती गर्न लागे- हे नाथ ! यो कुरा सुनेर मेरो मन अत्यन्त प्रसन्न भयो । अझ मेरो उपर करुणा गरी अरू पनि धर्मको शिक्षा दिनुहवस् ॥

गूढार्थ- सुत्केरी पैंतालीस दिनसम्म तेलका लुगाले मैली कुचैली रहने र रक्तस्राव पनि पूरा नसुकेको रहनाले पैंतालीस दिनसम्म पूर्ण पवित्र मानिन्न ॥

शिक्षा (१०२)- हे विजय ! कुनै व्यक्तिले प्रसन्न भएर केही दान-पुण्य गर्ने इच्छा गर्दछ भने त्यसलाई ठूलो पुण्य मिल्दछ । अनि मनमा घमण्ड राखी वा क्रोध गरी दान गर्ने वा

दान लिने व्यक्तिलाई चित्त दुखाई दान दिन्छ वा लिन्छ भने त्यसको केही फल प्राप्त हुँदैन, उल्टो झन् दोष मात्र लाग्दछ ॥

गूढार्थ- दिल दुखाएर दान दिनाले दुखेको दिलले दिक्दारीरूप दुःख बढ्छ । त्यस्तो हुनु नै पाप हो ॥

शिक्षा (१०३)- हे विजय ! जुन व्यक्तिले आफ्नू पुत्र कसैलाई धर्मपुत्रको रूपमा दिन्छ; त्यस पुत्रले दिएको पिण्ड-पानी जसले धर्मपुत्र लिएको छ उसैले पाउँछ, जन्मदिने पिताले पाउन्न । धर्मपुत्र बनाउन दिएको र अर्काको धर्मपुत्र बनिसकेको छोरो केही कारण परेर फिर्ता लियो भने त्यो पाप कसरी नाश हुन्छ ? विजयको यस्तो प्रार्थना सुनी श्रीकृष्ण आज्ञा गर्नुहुन्छ-- हे पार्थ ! त्यो व्यक्तिले आफ्ना स्त्री पुत्र-सहित गंगा-स्नान गरेर कैली गाई ब्राह्मणलाई दान दिई भगवान्सित क्षमा माग्यो भने त्यो पापबाट छुट्कारा पाउन सक्छ ॥

गूढार्थ- धर्मपुत्र दिएपछि त्यस पुत्रलाई अर्कोको मनले स्वीकार गरिसकेको हुन्छ, अर्थात् आफ्नै पुत्र मानिसकेको हुन्छ । त्यस्तो पुत्र खोसेर ल्याउँदा उसको चित्त दुख्नेछ । अनि त्यस धर्मपुत्रप्रति पनि उसले अनेक थरिका कुभलो चिताउन थाल्दछ । अतः त्यसको दुःखी हृदयले सरापेको लाग्न

सक्तछ । त्यसै कारण, सारा पाप गंगामा पखालेर, कर्मका फलदाता ईश्वरसित क्षमा माग्नुपर्दछ, क्षमा दिन प्रभु बाहेक अरूले सक्तैन ॥

शिक्षा (१०४)- हे विजय ! लडाइँमा डराएर वा पराजित भएर शरण पर्न आएका शरणागत व्यक्तिलाई शत्रुको भयले जो मार्दछ वा शत्रुको जिम्मा दिन्छ, त्यस्ता व्यक्तिका सन्तान हुँदैनन् । भएका भए पनि मर्दछन् र दरिद्र हुन्छन् । मरेपछि पनि त्यस्ताले चन्द्र-सूर्य रहेसम्म नरकमा बस्नुपर्दछ ॥

गूढार्थ- शरणागतलाई मार्ने या सौंपनेलाई शरणागतको कल्पेको आत्माले सरापेको लाग्छ र त्यसले पिरी दुःख पाउँछ ॥

शिक्षा (१०५)- हे विजय ! जसले कागज वा काठमा मनुष्य आदिको दुरुस्त अनुहार मिल्ने गरी तस्वीर बनाउँछ भने त्यो ठूलो पाप हो । त्यस पापले उसले यस लोकमा सन्तान-सुख पाउन्न र परलोकमा पनि अन्धो हुनुपर्नेछ ॥

गूढार्थ- अर्काको अनुहार उतार्न तल्लीन भएको व्यक्तिको मनमा उसकै अनुहार गाडिएको हुन्छ । त्यसैले उसको पुत्रको रूप पिताको रूपसित नमिल्ने हुन्छ; अनुहार नमिलेपछि बानी

बेहोरा पनि मिल्दैन । पुत्रको अनुहारमा आफ्नू रूप देख्न नपाउनु नै अन्धो हुनु हो र छोराका स्वभाव नमिल्नाले राय बाझेर दुःख पनि पाइन्छ । दुःखमा पर्नेले दुःखै पाइरहन्छ । पूर्वजन्मका संस्कारले अर्को जन्ममा पनि त्यस्तै अन्धो भएर कष्ट भोग्नुपर्दछ ॥

शिक्षा (१०६)- जसले कुरा गर्दा अर्काको मुखमा छिटा पार्दछ, त्यस पापले त्यो पापीको अर्को जम्ममा सुँगुरको जन्म हुन्छ ॥

गूढार्थ -तमोगुणी वस्तु खानेको मुखबाट बोल्दा बढी छिटा निस्कन्छ; किनकि त्यस्ताको थूक बाक्लो हुन्छ । यदि त्यो बानी त्याग्दैन भने त्यस्तो व्यक्ति तमोगुणमै डुबिरहन्छ र अर्को जुनिमा सुँगुरको जन्म पाउँछ ॥

शिक्षा (१०७)- हे विजय ! जो व्यक्ति आफ्नू अन्नदाता मालिकले अह्राएको काम गर्दैन, त्यो मानिस यस लोकमा बढी कष्ट पाउँछ र मरेंपछि पनि त्यसले नरक-यातना भोग्नुपर्दछ । मालिकले अह्राएको काम नगर्नु ठूलो पाप हो । यस्तो श्रीकृष्णले आज्ञा भएको सुनी पार्थले सोधे- हे वासुदेव ! आफूले गर्न नसक्ने काम मालिकले अह्रायो र आफूले त्यो काम गर्न

सकिएन भने त्यो पापबाट उक्त व्यक्तिको कसरी उद्धार हुन्छ? - भनेर अर्जुनले बिन्ती गर्दा श्रीकृष्ण भगवान् आज्ञा गर्नुहुन्छ- हे पार्थ ! आफूले गर्न नसक्ने कठिन काम मालिकले अह्रायो, आफूले त्यो काम गर्न सकिएन भने जुन दिनदेखि काम गर्न सकिएन, त्यसै दिनदेखि तलब-तनाखा केही नलिई मालिकको घरमा, फेरि मालिकले अरूजे काम अह्राउँछन् त्यो काम पूरा गरेर मालिकलाई प्रसन्न तुल्याउन सक्यो भने त्यसबाट निस्तार पाउँछ । यदि अगाडि नै पेश्की तलब लिएको भए पनि जति लिएको छ, सबै फर्काइदिनू । श्रीकृष्णको यस्तो वचन सुनेर पार्थ फेरि बिन्ती गर्दछन् - हे नाथ ! चाकर कंगाली भए, मालिकले अग्रिम दिएको तलब फर्काउन सकेन भने के गर्ने ? अर्जुनको यस्तो बिन्ती सुनेर श्रीकृष्ण फेरि आज्ञा गर्नुहुन्छ- केही गरी तनखा फर्काउन सकेन भने पनि आफूले पाएको तनखाबाट चार भागको एक भाग दान पुण्य गरिदिनू र ईश्वरसित- 'मैले बिराएँ' भनेर प्रार्थना गर्नू र त्यस पापबाट मुक्त हुन्छ र उ सुखी रहनेछ ॥

गूढार्थ- मालिकको काम हुन सकेन भने नोक्सान लाग्दछ, अनि तनखा दिन सक्तैन, तनखा नपाएपछि दुःख भयो, त्यो

पनि पाप नै हो । ढाक्रे बेलाको तलब लिए बानी बिग्रन्छ; अनि नोकरी नै जान्छ । अन्त पनि त्यस्ता व्यक्तिलाई काम पाउन सकसै पर्दछ; यस्ताले खाँचो पर्दा पैसा पाउन सक्तैनन्; यो पनि एउटा पाप नै हो ॥

शिक्षा (१०८)- हे विजय ! जो व्यक्ति नयाँ घर बनाउँदा त्यो घर पूरा नबन्दै त्यस घरमा सरेर खानेकुरा खान्छ, त्यहीं सुत्ने बस्ने गर्दछ; त्यसलाई ठूलो पाप लाग्दछ । त्यसै कारण, घर पूरा बनिसकेपछि त्यसको वास्तुप्रतिष्ठा गरी राम्रो साइतमा ब्राह्मण-भोजन गराई आफ्ना बाल बच्चासहित भएर त्यस घरमा बस्ता आफ्नू सबै कुरा उत्तम हुन्छ । धन-सन्तान बढ्दछन् ॥

गूढार्थ – पूरा नबनिसकेको घरमा बस्ता काठ-कीला इत्यादि खसेर चोट-पटक लाग्ने वा किचिने भय रहन्छ । शान्ति-स्वस्ति नगरेको घरमा कतै त्यस घडेरीमा भूत-प्रेतादिक निवास भएको भए दुःख दिन सक्तछ । अतः ब्राह्मणद्वारा वेद पाठ गराएर घर सरे उत्तम हुनेछ ॥

शिक्षा (१०९)- हे विजय ! जो व्यक्ति तीर्थ जान भनेर घरबाट हिंडेपछि बाटामा अर्काले दिएको खाना खान्छ भने त्यसलाई तीर्थ गरेको पुण्यको फल केही प्राप्त हुँदैन । त्यो

पुण्य त खुवाउनेले नै प्राप्त गर्दछ । श्रीकृष्णको यस्तो आज्ञा सुनेर धनंजय बिन्ती गर्दछन्- हे वासुदेव ! तीर्थ जाँदा कोही आफ्नू नाता पर्ने भाइबन्धु आदिले सौगात दिएको नलिई भएन भने के गर्ने ? यस्तो अर्जुनको बिन्ती सुनी श्रीकृष्ण आज्ञा गर्नुहुन्छ-हे अर्जुन ! जहाँसम्म तीर्थमा स्नान गरेको छैन, उहाँसम्म नातादार, भाइ-बन्धु कसैले दिएको पनि सौगात लिनु हुँदैन । तीर्थस्नान गरिसकेपछि घर फर्कने अवसरमा केही सौगात दिए अथवा आफ्नू घरमा खान दिए भने घर पुगेपछि आफूलाई अर्काले दिएको सौगातको दोबर ब्राह्मणलाई दान गरेर, तीर्थे-भोज गरी दान-पुण्य गर्नाले अर्काले दिएको सौगात लिएको र खाएको दोष-पाप काटिन्छ; अनि तीर्थाटनको फल पनि पाइन्छ।।

गूढार्थ- जसको निमक खाएको छ, कामको फल उसैलाई मिलेको र उसको कृपापात्र मात्र आफू बनेको त सबैले देखे-जानेकै कुरा हो। त्यसकारण अरूको निमक नखानू, खानेपरे तिरिदिनू, तिर्न नमिले दोब्बर दान गरी अऋणी हुनू ।।

शिक्षा (११०)- हे विजय ! जो मानिस गुँडमा बसेका चराका बच्चाहरूलाई हातले छुन्छ वा गुँडबाट झिक्दछ, त्यो

व्यक्ति जन्मभरि दरिद्र रहनेछ; त्यसका छोरा-छोरी भए पनि मर्छन्, निःसन्तान हुन्छ, मरेपछि नरकमा पर्दछ । अर्को जन्ममा पनि त्यस व्यक्तिले सन्तान र धनको सुख पाउन्न, किनकि मानिसले छोएपछि चरा- चुरुंगीले आफ्ना बच्चालाई चारा ख्वाउन छाड्छन्, अनि बच्चा भोकै मर्दछन् । त्यही बालहत्या त्यसका शिरमा बज्रन्छ ॥

गूढार्थ- बालहत्या, भ्रूण-हत्या भनेको ठूलो पाप हो । पापले अन्त्यमा कष्ट दिन्छ, पापको गाग्रो भरिएपछि अवश्य फुट्तछ, नभरिएसम्म पापले नै सुख-प्राप्त हुन्छ, तर घडा भरिएपछि निकै कष्ट दिन्छ ॥

शिक्षा (१११)- हे विजय ! गाईको दूध नछानेर कहिल्यै नखानू, किनकि गाईको रौं पनि दूधमा खाइन्छ । जसको पेटमा गाईको रौं पर्दछ, त्यो व्यक्ति सदा दरिद्री रहनेछ, तसर्थ गाईको दूध नछानेर खानुभन्दा ठूलो पाप अर्को केही छैन । त्यसै कारण जान्ने व्यक्तिले गाईको दूध नछानेर कहिल्यै नखानू ॥

गूढार्थ- गाईको रौं जसको पेटमा पर्दछ ती कामुक, स्त्री-लम्पट, हाड-नाताको छ्यान-विचार नगर्ने, केवल भौतिक

सुखलाई नै उत्तम ठानेर चल्ने दुष्ट, हत्यारा र म्लेच्छ हुन्छन् ॥

शिक्षा (११२)- हे विजय ! जो मानिस रोइरहेको बालकलाई चुप लगाउन छाडेर उल्टै कूट-पीट गर्दछन् भने त्यस पापले ती संसारमा धन-सन्तान र गाँस-वासको सुख नभएका सधैं दुःख पाइरहने हुन्छन् ॥

गूढार्थ- जो जन बालकलाई रोएमाथि झन् रुलाउँछ, त्यस बालकको शुद्ध आत्माको रुवाइले रुवाउनेलाई नै दुःख दिन्छ ॥

शिक्षा (११३)- हे विजय ! जो व्यक्ति बिहानै उठेर कुल्लासम्म पनि नगरी चिया, दूध पिउँछन्, पान खान्छन् र आँखा छलेर मालिकको वस्तु खाइदिन्छन्; त्यस्ताले कहिल्यै सुख पाउन्नन् ॥

गूढार्थ- बासी मुखले खाँदा रातभरि मुखमा जमेको गन्दा पेटमा गएर बिगार गर्दछ र दुःख पाइन्छ । मालिकले नदिई खानाले चोरी दोष लाग्न सक्छ र दुःख पाइन्छ ॥

शिक्षा (११४)- हे विजय ! वृक्षमा फलेका फल जो काँचै टिप्दछन्, त्यस्ता व्यक्तिलाई ठूलो पाप लाग्दछ । पाकेर

खानेलायक भएपछि टिपेर खायो भने कुनै दोष लाग्दैन ।।

गूढार्थ- काँचो कट्मेरो फल खाए पेट दुख्छ, चुर्ना जुका पर्छ र पिर्छ, यही पिरिनु नै पाप हो । पाकेको फल पुष्टकारी हुन्छ र त्यो खानु धर्म हो ।।

शिक्षा (११५)- हे विजय ! जो व्यक्ति आफ्नू चाकरी गर्नेहरूलाई तोकेबमोजिम तलब-तनखा दिंदैन, चाडबाडमा आशामुखीहरूको आशा पूर्ण पार्दैन, त्यसलाई जन्मभरि सुख शान्ति प्राप्त हुन्न ।।

गूढार्थ- गरीबलाई तड्पाउनेलाई गरीबको तड्पेको आत्माले तड्पाउँछ ।।

शिक्षा (११६)- हे विजय ! जो मानिस दान गर्न लागेको वस्तु कुनै पात्रमा राखी, त्यो पात्र आफ्नू हातमा उचाली संकल्प गर्दछ र त्यो दानको वस्तु आफ्नू हातमा छँदै दान थाप्ने ब्राह्मणले 'स्वस्ति' भने भने- त्यो दानको वस्तु राखेको पात्र पनि दान थाप्ने ब्राह्मणकै हुन्छ । सोही कारणले दान गर्ने वस्तु राखेको पात्र दान लिने ब्राह्मणलाई दिनैपर्छ । नदिए त्यसको साटो आफ्नू शक्ति-अनुसार जे पुग्दछ, सुनको हात बनाई उनै ब्राह्मणलाई दियो भने मात्र त्यस हातले खान-पिन,

दान-पुण्य गरेको आफूलाई हुन्छ, नभए त्यस हातले जे गरे पनि आफूलाई फल मिल्दैन । यति श्रीकृष्णले आज्ञा भएको सुनी अर्जुनले प्रश्न गरे- हे वासुदेव ! जो दान गर्ने वस्तु राखेको भाँडो दिन समर्थ नभए के गर्ने ? यस्तो विजयको प्रश्न सुनेर फेरि श्रीकृष्ण आज्ञा गर्नुहुन्छ - हे पार्थ ! यसै कारण, दान गराउन नजान्ने मूर्ख ब्राह्मणलाई संकल्प गरेर दान नदिनू । मूर्खलाई केही दिने इच्छा भए संकल्प नगरी त्यसै दिनू । संकल्प गरेर दिनुपर्दछ भने दान गराउन जान्ने ब्राह्मणलाई मात्र दिनू; नभए पुण्यको साटो पाप आइलाग्न सक्तछ ।।

गूढार्थ- दान लिनै नजान्नेलाई संकल्प गरी दान दियो भने त्यो दानको फल उत्पीडक हुन्छ ।।

शिक्षा (११७)- हे विजय ! जो व्यक्ति पहिले विवाह गरेकी पत्नी मरेपछि अर्को बिहे गर्छ, त्यस अर्कीबाट कहिल्यै सुख पाउन सक्तैन । श्रीकृष्णको यस्तो वचन सुनेर पार्थले सोधे- हे यदुनाथ ! पहिलेकी पत्नी मरेपछि अर्की स्वास्नी विवाह गर्नेले सन्तानको सुख भोग्न नपाउने कारण के हो ? पार्थको यस्तो प्रश्न सुनेर श्रीकृष्ण आज्ञा गर्नुहुन्छ- हे विजय ! पहिले विवाह गरेकी स्त्री मर्दा यदि त्योतिर सन्तान

भएका छैनन् भने अर्की पत्नी विवाह गरेमा कुनै दोष छैन, अगाडिकी पत्नीतिर सन्तान भएर पनि विवाह गर्दछ भने-त्यो मूर्ख सदाको दरिद्री हुनेछ र महापातक पनि लाग्दछ । संसारमा पनि सधैं कष्ट पाउनेछ, मरेपछि पनि नरक निवास गर्नेछ, किनकि जब कान्छी पत्नी घरमा आउँछे, पहिलेकी पत्नीतिरका छोरा-छोरीलाई सहन्न । त्यसै कारण, आफ्नू मनमा पनि चिन्ता बनिरहन्छ । त्यो सौताका सन्तानलाई नसहने नारीलाई पनि संसारमा सबै जनाले निन्दा गर्दछन् । त्यसका सन्तान पनि हुँदैनन्, मरेपछि पनि सौताका सन्तान नसहेको पापले गर्दा, त्यसको जन्म पोडे वा सुँगुर्नीको योनिमा हुन्छ ॥

गूढार्थ- जो अरूलाई सताउँछ, त्यो आफ्नू क्रूर कर्मका फलले स्वयं सताइन्छ ॥

शिक्षा (११८)- हे विजय ! जो मानिस जूआ खेल्छ वा जुआडीको संगत गर्दछ, त्यसको हातमा कहिल्यै एक पैसा पनि रहन्न, सदाको दरिद्री रहन्छ । त्यस्ताको कुराको कसैले पत्यार गर्दैन । त्यो मरेपछि नर्कमा पर्दछ । अनि अर्को जन्ममा भाटको योनिमा जन्म लिन्छ । त्यसमा पनि सदा मिथ्या बोल्दछ, फेरि त्यो मरेपछि नर्कमा पर्दछ, फेरि पनि भाटकै कुलमा जन्म लिन्छ, यसरी सात जन्म लिएर अनेक कष्ट

भोग्नुपर्दछ, तसर्थ हे पार्थ ! जान्ने मानिसले कहिल्यै जूआ नखेल्नू ।।

गूढार्थ- जुआडेले जुआ खेल्न पाएपछि स्वास्नी, छोरा-छोरी, घर खेत केही मान्दैन, सारा हारेर परिवारलाई अलपत्र पारिदिन्छ । बाहिर कसैसित झगड़ा परे; घर आएर स्वास्नी भकुर्छ । अनि व्यर्थ बरबराइरहन्छ, यही सब पापले दुःख पाउँछ र भाट भइरहन्छ ।।

शिक्षा (११९)- हे विजय ! जो मानिस भाट, भाँड र सुँडिनीलाई बक्स-पात दिन्छन्, त्यस व्यक्तिको यस जन्ममा ठूलो अपयश हुन्छ, मरेपछि पनि त्यसले नरक भोग्नुपर्दछ किनकि जसले भाटलाई एकपल्ट ईनाम पात दियो, अर्कोपल्ट दिन सकेन भने आफ्नू अपकीर्ति गाउन थाल्दछ । भाँड पनि त्यस्तै हो, दिएसम्म क्यै भन्दैन, उसले मागेको कुरा पाएन कि तत्काल गाली गर्न थाल्दछ । सुँडिनीलाई त जुन दिन रुपियाँ पैसा दियो, त्यसै दिन पनि गाली गर्दछे, त्यसै कारण, तिनलाई जसले रुपियाँ पैसा दिन्छ, त्यो व्यक्तिलाई यस जन्ममा पनि अपयश मिल्दछ र मरेपछि पनि नरक भोग्नुपर्दछ । फेरि अर्को जन्ममा पनि भाट, भाँड, सुडिनीकै कुलमा जन्म लिनुपर्दछ । यति श्रीकृष्णको वचन सुनेर अर्जुन आफूले अघि-अघि

भाट,भाँड, सुडिनीहरूलाई इनाम-पात दिएको हुनाले निकै चिन्ता गर्न लागे । तिनले चिन्ता गरेको देखेर उनको मन प्रसन्न पार्न श्रीकृष्णले आज्ञा भयो- हे पार्थ ! पहिले गरेका कुरामा ईश्वरसित क्षमा माग, अबदेखि भाट, भाँड र सुँडिनीको मंगल नगरे तिमीलाई पहिलेको केही दोष लाग्दैन ॥

गूढार्थ- कृतघ्नी दुष्टहरूको संगतले परिणाममा पिर्छ ॥

शिक्षा (१२०)- हे विजय ! जो व्यक्ति दिसा गएर स्नान नगरी पुण्य कार्य गर्दछ, त्यसले पुण्यको साटो पाप नै कमाउँछ॥

गूढार्थ- अपवित्र हालतमा चित्त शुद्ध हुँदैन, चित्त शुद्ध नभै ध्यान स्थिर रहन्न । विना ध्यानको श्रद्धा हुन्न । विना श्रद्धाको पुण्य मिल्दैन, बल्कि समय र सामग्रीको बर्बादीरूप पाप मात्र मिल्छ ॥

शिक्षा (१२१)- हे विजय ! प्रत्येक सातामा हात-पाउका नङ नकाटी पालिराख्ने व्यक्तिले गरेको पुण्य निष्फल हुन्छ ॥

गूढार्थ- नङमा फोहोर अड्केको हुन्छ, त्यो फोहोर जल प्रसादीहरूमा पर्छ, त्यस्तो जल-प्रसादी खानेलाई बिगार गर्छ, यही नै पुण्यको कुफलको फल हो ॥

शिक्षा (१२२)- हे विजय ! जुन व्यक्तिले तुलसी को

वृक्ष आफ्नू आँगनमा राख्दछ, र दिनहुँ पवित्र भएर तुलसीलाई जल चढाउँछ, तुलसीलाई चन्दन, अक्षता फूलहरूले पूजा गर्दछ, साँझमा तुलसीमा दियो बाल्दछ, त्यसका घरमा सदा लक्ष्मीको वास रहन्छ । यो कामले उसलाई अश्वमेध यज्ञको फल प्राप्त हुन्छ । यो पुण्य कार्य सधैं गर्न नसके पनि कार्तिक महीनाभरि अवश्य गर्नुपर्दछ । शक्ति भए कार्तिक महीनाको कुनै एक दिन अमलाको वृक्षमनि बसालेर ब्राह्मण-भोजन गराउनू । यो कार्य रविवार नगर्नू ।।

गुढार्थ- तुलसी ठूलो औषधी हो- यो आयुर्वेदले भन्दछ। यसको सेवनले अनेक प्रकारका कष्ट निको हुन्छन् । यस्तो उपयोगी तुलसीको बोट घरमा हुनु उत्तम रहन्छ । कार्तिक मासमा त कालो तुलसीको बोट नराखी हुन्न, कार्तिकमा अमलाको हावा लागेको भोजन पनि रोगनाशक हुन्छ ।।

गौरीशंकर भन्दछन् जनहरू, हो भट्टराई थर
काशीमा अहिले म छू अघि त हो, नेपाल मेरो घर ।
संवत् विक्रम दो हजार पछिको, छप्पन्नको सालमा
खारीयो बुझ ज्ञान बढ्दछ भनी, सन्तोषको निम्तिमा ।।

※ समाप्त ※